# गोरखा परिचय
## (स्मारिका)

गोरखा समाज सेवा केन्द्रद्वारा प्रकाशित



चारजात छत्तीस वर्णको साझा फूलबारी

२७७ औं पृथ्वी जयन्ती
तथा
राष्ट्रिय एकता दिवस
२०५५

# गोरखा परिचय

## (स्मारिका)

२७७ औं पृथ्वीजयन्ती, २०५५ मूल्य रु. १००/-

निवर्तमान संस्थापक अध्यक्ष
**डा. उपेन्द्र देवकोटा**
निवर्तमान अध्यक्ष
**शरदबाबु श्रेष्ठ**

वर्तमान पदाधिंकारीहरू
अध्यक्ष
**मणिराज गुरुङ**
उपाध्यक्ष
**प्रथम : पुष्प थपलिया**
**द्वितीय : रामकुमार श्रेष्ठ**
महासचिव
**हरि सिलवाल**
सचिव
**हिराकाजी श्रेष्ठ**
कोषाध्यक्ष
**हिमलाल काफ्री**
सदस्य
**रमेश शर्मा**
**पदम पोखरेल**
**रेशम पोखरेल**
**नारायण गुरुङ**
**कृष्ण लामिछाने**
**जीतबहादुर घले**
**लिकुलबाबु श्रेष्ठ**
**खड्गबहादुर गुरुङ**
**सुश्री इन्दिरा घिमिरे**

सम्पादक-मण्डल
**रमेश शर्मा**
**पुष्प थपलिया**
**रामकुमार श्रेष्ठ**
**सीताराम अधिकारी**
वजार व्यवस्थापक
**हरि सिलवाल**
**हिमलाल काफ्री**
**नारायण गुरुङ**
**मणिराज गुरुङ**
**हिराकाजी श्रेष्ठ**
**खड्गबहादुर गुरुङ**
विशेष सहयोगी
**दीपक न्यौपाने**
**रेशम पोखरेल**
**तोपनाथ देवकोटा**
कानूनी सल्लाहकार
**अधिवक्ता भगवान गुरुङ**
आवरण
**राजेन्द्र न्यौपाने**
प्रकाशक
**गोरखा समाजसेवा केन्द्र**
**काठमाडौं**
कम्प्युटरसेटिङ
**भीमसेन घिमिरे**
मुद्रक
**नवदुर्गा प्रिन्टिङ सपोर्ट, पुतलीसडक**

## सम्पादकीय

# युगीन आकाङ्क्षा

विगत केही वर्षयता राष्ट्रमा च्याउ उम्रिएझैं गरी गैरसरकारी संघसंस्थाहरू देखापरे । कतिपयको घोषित लक्ष्य समाजसेवा गर्नु रहेको छ । तर समाजसेवाको विशुद्ध भावना लिएर अस्तित्वमा आए तापनि तीमध्ये धेरैजसो निस्क्रिय नै रहेको पाइएको छ । घोषित लक्ष्यअनुरूप तिनले कार्य गर्न सकेका छैनन् । थोरैमात्र यस्ता गैरसरकारी संस्थाहरू छन् जसले घोषीत लक्ष्यअनुरूप नै कार्य गर्न नसके तापनि निस्क्रिय चाहिं छैनन् । यस्तै संस्थाहरूको पङ्क्तिमा उभिएको छ गोरखा समाजसेवा केन्द्र । गोरखाबासीका बीचमा आपसी सहयोग र सद्भाव विकसित गर्ने, गोरखालीलाई परेको दैवीप्रकोपमा सकेसम्म सहयोग गर्ने, काठमाडौंमा एक स्वास्थ्यकेन्द्र स्थापना गर्ने, गोरखा जिल्लाको सर्वाङ्गीण विकासका लागि सहयोग गर्ने तथा प्रत्येक वर्ष काठमाडौंमा गोरखालीहरूको वृहत् भेटघाट कार्यक्रम आयोजना गर्नेजस्ता उद्देश्य लिएर स्थापना भएको गोरखा समाजसेवा केन्द्र आफ्ना लक्ष्यपूर्ति गर्ने दिशामा निरन्तर सक्रिय हुने प्रयास गर्दैछ ।

खास गरी गोरखा जिल्लालाई नै आफ्ना गतिविधिको केन्द्रविन्दु बनाए तापनि मेचीदेखि महाकालीसम्म र तराईदेखि पहाडसम्मका सम्पूर्ण नेपाली दाजुभाइ तथा दिदीबहिनीबीच परस्पर स्नेह, सद्भाव, सहयोग र समभदारी अभिवृद्धि गर्ने कार्यमा पनि यसले पछाडि नपर्ने अठोट व्यक्त गरेको छ । राष्ट्रनिर्माता श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको जन्मजयन्ती तथा राष्ट्रिय एकता दिबसका अवसरमा यस केन्द्रद्वारा प्रकाशित स्मारिका सोही तथ्यको ज्वलन्त उदाहरण हो । नेपालका राष्ट्रनिर्माताको जन्मजयन्तीका उपलक्ष्यमा प्रकाशित यो स्मारिकाले सम्पूर्ण नेपालीमात्रमा राष्ट्रिय एकीकरणको भावना जाग्रत गराउने पुनीत आकाङ्क्षा राखेको छ । विगत केही वर्षयता जाति, धर्म, क्षेत्र तथा राजनीतिक आस्था र विश्वासको आधारमा राष्ट्रमा अवाञ्छित विभाजनका रेखाहरू कोरिनगई हाम्रो राष्ट्रियतामा समेत आँच आउन सक्ने सम्भावनाका सङ्केतहरू देखापर्न थालेको कुरालाई कसैले अस्वीकार गर्न सक्तैन । यो किसिमको विखण्डनवादी प्रवृत्तिलाई कुनै पनि राष्ट्रको जीवनमा अत्यन्तै खतरनाक सङ्केतका रूपमा लिइनुपर्छ । वर्तमान विश्वमा पूर्व युगोस्लाभिया यसको ज्वलन्त उदाहरण बनेर रहेको छ ।
बहुलवादी परम्परामा वैचारिक विविधता देखिनु नितान्त स्वाभाविक कुरो हो । त्यस्तै स्वतन्त्र र उन्मुक्त वातावरणमा हर कोही जाति, धर्मावलम्वी, वर्ग तथा राजनीतिक विचारधाराका पक्षधरले आ-आफ्नो हितको पृष्ठपोषण गर्ने आकाङ्क्षा राख्नु पनि अस्वाभाविक होइन । तर विविधताका बीच पारस्परिक सम्मानमा आधारित सहअस्तित्वको खोजी नै प्रजातन्त्र हो भन्ने कुरो कसैले पनि भुल्न हुँदैन । जसरी यो राष्ट्रको क्षेत्रीय एकीकरणका लागि गोरखालीहरूले अनुपम पौरुष र वीरताको प्रदर्शन गरेका थिए, त्यसै गरी सम्पूर्ण नेपालीमात्रलाई भावनात्मक ऐक्यवद्धतामा समेटी हाम्रो राष्ट्रियतालाई सदृढ र मजबूत तुल्याउने दिशामा पनि पुन: एकपटक गोरखालीहरू अगाडि बढ्नुपरेको छ । यो राष्ट्र र नेपाली समाजले गोरखालीहरूबाट हिजोजस्तै वीरतापूर्ण नेतृत्वको अपेक्षा राखेका छन् । नेपालीमात्रको गौरवमय राष्ट्रियताका सूत्रधार बडामहाराजाधिराज पृथ्वीनारायण शाहको जन्मजयन्तीको पावन अवसरमा प्रकाशित यो स्मारिका त्यही गन्तव्यतर्फको गहकिलो पाइला बनोस्, यही नै हाम्रो युगीन आकाङ्क्षा पनि हो ।



श्री ५ को सरकार
सिंहदरबार
काठमाडौं

**पूर्ण बहादुर खड्का**
युवा खेलकूद तथा संस्कृति मन्त्री
निजी सचिवालय
सिंहदरबार
काठमाडौं, नेपाल ।

कार्यालय: २-१२०१४
निवास: [illegible]
निवास: [illegible]

पत्र संख्या :-

मिति ------------

विषय :- शुभकामना

आधुनिक नेपाल राष्ट्रका निर्माता प्रात:स्मरणीय बडामहाराजाधिराज श्री ५ पृथ्वीनारायण शाहको ओजस्वी व्यक्तित्व, प्रेरक आदर्श, जीवनचरित्र एवं नेपाल र नेपाली प्रति मौसूफ सरकारको देनका विषयमा सर्वसाधारणलाई अवगत गराउन गोरखा समाज सेवा केन्द्रले मौसूफको स्मारिका प्रकाशित गर्दैछ भन्ने थाहा पाएर मलाई साह्रै खुशी लागेको छ ।

यस सराहनीय कार्यको निम्ति गोरखा समाज सेवा केन्द्रलाई साधुवाद दिदै म यस प्रयासको सफलताको कामना गर्दछु ।

मा. पूर्णबहादुर खड्का
युवा, खेलकुद तथा संस्कृति एवं वाणिज्य मन्त्री

# विषयक्रम



# पृथ्वीनारायण शाह सदाको लागि

**– राजेश्वर देवकोटा**

कुनै कुनै इतिहास र पुराण सद्य-नवीन भएर प्रस्तुत हुन्छ । दूरदृष्टि भएका महापुरुष पृथ्वीनारायण शाहले सवा दुई शय वर्षपहिले हुकुम भएको कुरा दिनदिनै स्मरण गर्नुपर्ने त छँदै थिए, कुनै बेला ती अधिक प्रेरक भएर निस्किन्छन् । अहिलेको बेला यो अधिक स्मरणयोग्य हुनआएको छ । एउटा अवस्थावाट अर्को अवस्थामा समाजको चिन्तन सर्न लागेको बेला हो यो ।

नेपाल राष्ट्रको निर्माण आम जनतामा चेतना आएर भएको होइन, एउटा देशभक्त वीरको आह्वानमा जनताले आत्मोसर्ग गरिदिएको कारण हुनगएको हो । सारांशमा, यस देशको निर्माण त्यसबेलाको राजनीतिक पद्धतिमा भएको हो जुनबेला प्रजातन्त्रपद्धति थिएन तर उदारवादी व्यवहार थियो, राष्ट्रिय चेतना थिएन तर देश र संस्कृतिप्रति भक्ति थियो । राजाप्रति जनताले भक्ति राख्ने, राजाले जनताप्रति उदार हुने परिपाटीबाट सञ्चालन भएको देश अब राष्ट्रिय चेतनाद्वारा सञ्चालित हुनुपरेको छ । यस्तो बदलिँदै गरेको अवस्था सहज र सरल हुँदैन । त्यसकारण यसबेलाको पिंढीले विशेष उत्तरदायित्व बहन गरेको छ भन्नुपरेको हो ।

इतिहासको क्रममा यो पिंढी सर्वाधिक महत्वपूर्ण छ । मुलुकलाई एउटा अवस्थावाट अर्को अवस्थामा लैजाने पिंढीले इतिहासमा आफ्नो स्थान कस्तो राख्नेछ – यो परीक्षाको घडी छ । तत्कालको कुरा गर्ने हो भने यस पिंढीको प्रस्तुति सन्तोषजनक छैन, समाज विच्छृङ्खल अवस्थामा छ । प्रजातान्त्रिक स्वतन्त्रताले केही उच्छृङ्खलतालाई पनि अवसर दिएको छ । जनमतले राजनीतिज्ञहरूलाई नियन्त्रणमा राख्न सकेको छैन, राजनीतिज्ञहरूले पनि आम जनतालाई विश्वासमा लिन सकेका छैनन् । आम जनतामा राष्ट्रिय चेतना वा भावनामा अडिनुपर्ने राष्ट्रले आफ्नो आधार बलियो नसक्ता विकृतिहरूले प्रवेश गरिहाल्छन् । जस्तो – राष्ट्रको सीमासमस्यामा पनि सबै नेपालीको समान उत्सुकता देखिएको छैन । यस्तै अन्य अनेक समस्या, जो जटिल हुँदा सबै नेपालीले समान दुःख वा हीनता भोग्नुपर्छ, त्यस्ता विषयमा समान दृष्टिकोण नहुनु राष्ट्रिय चेतनाको विकास नभएको अवस्था हो भने बुझ्नुपर्छ ।

अहिले निर्णायक शक्ति त जनता हो तर बहुमत जनतालाई आफ्नो राष्ट्रको सिमाना कहाँ हो, राष्ट्र भनेको के हो त्यो नै थाहा छैन । जनता सार्वभौमसत्तासम्पन्न छ । जनताका प्रतिनिधिले सार्वभौमसत्ताको उपयोग गरेका छन् । जनताको नियन्त्रण नहुने सार्वभौमसत्ताको उपयोग प्रतिनिधिको नाममा व्यक्तिविशेषहरूले गर्न पाउने हुँदा त्यसको दुरूपयोग हुन्छ, नेपालमा भइरहेछ ।

भ्रष्टाचार वा यस्तै अनाचारहरू विकसित मुलुकहरूमा पनि हुन्छन् तर त्यहाँको जनताको स्वर चर्को छ । आचारसम्मत काम नगर्नेले सजाय पाइहाल्छ, तर यहाँको त्यो

स्थिति छैन । त्यसकारण प्रतिनिधिको नाममा व्यक्तिविशेषले गरेको भ्रष्टाचारमा ऊ सजायको भागी बन्ने बाध्यात्मक स्थिति आइसकेको छैन ।

राजाको अधिनायकत्वमा शताब्दीयौंदेखि सञ्चालित राज्यव्यवस्था हालैमात्र परिवर्तित भएको छ । राणाहरूले राजाकै नाममा अधिनायकत्व चलाएको हो । राजाको अधिनायकत्वको प्रवाह २०४६ सालपछिमात्रै खण्डित भएको हो । अब यहाँ कुनै अनाचार या विकृति-विखण्डनका लागि राजालाई प्रत्यक्ष उत्तरदायी बनाउन सकिन्न, जनता नै स्वयं उत्तरदायी भएको छ । जनताको जस्तो चेतनाको स्तर छ, यहाँ जनप्रतिनिधि भ्रष्ट वा निरंकुश हुन सक्ने अवस्था उत्पन्न भएको छ । यस्तो अवस्थामा राष्ट्र धान्न कसको प्रेरणा लिने त भन्दा सर्वप्रथम उनै पृथ्वीनारायण अघि सर्छन् जसले प्रजातन्त्रको नाम पनि सुनेको थिएन ।

प्रजातन्त्र चाहिन्छ, यस युगमा त्यो अनिवार्य नै छ तर यस मुलुकको निर्माण प्रजातन्त्रले गरेको पनि होइन, त प्रजातन्त्रले राष्ट्रियताको कति संरक्षण गर्न सक्छ त्यो अहिले त्यति भरपर्दो छैन । त्यसकारण अहिले राष्ट्रियतामाथि सङ्कट आउनु स्वाभाविक पनि छ । इतिहासको प्रवाहको एक अवस्थाबाट अर्को अवस्थामा परिवर्तन हुन लागेको यो बेला इतिहासको कठिन घडी हो । क्षेत्र, जाति, धर्म, वेषभूषा, भाषा, रहनसहन कुनैलाई आधार नमानी केवल राष्ट्रलाई आधार मानेर नेपालीले एकता कायम गर्नुमात्रै आजको बाटो हो जो पृथ्वीनारायण शाहले धेरै पहिले देखाएका छन् । यस्ता महान् पुरुषप्रति श्रद्धाञ्जलि चढाऔं, सदा स्मरण गरौं ।









# नेपालको पहिलो राजा र राष्ट्रियता

**– विश्वबन्धु थापा**

काठमाडौं उपत्यकालाई मात्र 'नेपाल' भन्दा यहाँ धेरै राजा भए । मल्लकालीन अवस्थामा त यस उपत्यकाले तीन राजा बेहोर्नुपर्‍यो । हिमाली क्षेत्रको यस्तै सानो राज्य गोर्खाका राजाले जब विशाल राज्यको कल्पना गरे, उनको ध्यान आर्थिक दृष्टिले सम्पन्न काठमाडौं उपत्यकातिर जानु स्वाभाविक थियो । पृथ्वीनारायण शाहले बेलैमा हिमाली राज्यको एकीकरणको थालनी नगरेका भए मकवानपुर र उपत्यकामा अङ्ग्रेजी साम्राज्यको आँखा पर्ने थियो र सम्भवतः आजको नेपालको भूगोलको चर्चा हुने थिएन । काठमाडौं उपत्यका लासासँगको व्यापारलाई उपयुक्त ठाउँ थियो, र चीनलाई दक्षिणतिरबाट घेर्न सजिलो पनि । तराईमा फैलिएको विशाल जङ्गलले आजको नेपाललाई भारतको आवादीबाट टाढा र सुरक्षित राखेको थियो । त्यस जङ्गलबाट दक्षिणतिर जाने प्रयास गोर्खाका राजाले गरेनन् । पश्चिमतिरका आफ्ना भैयादहरूसँग सङ्घर्ष गर्नुभन्दा उनले पूर्वतिर बढ्नु नै उचित भन्ठाने । उनको यसै निर्णयले आजको नेपालको जन्म भयो र यसरी पृथ्वीनारायण शाह नेपालको पहिलो राजा भए ।

पृथ्वीनारायण पश्चिमतिर लागेका भए उनको जीवनपर्यन्त उनले कालीगण्डकी तर्न बल गर्नुपर्थ्यो । उनले केही सफलता प्राप्त गरी पोखरा उपत्यकालाई आफ्नो राजधानी बनाएको भए पनि आर्थिक दृष्टिले उनी सम्पन्न हुने थिएनन् र आजको गण्डकीका राजाले अङ्ग्रेजको राज्यविस्तार आकांक्षामा समर्पण गर्नुपर्थ्यो । लासा जाने कालिम्पोङको बाटो अङ्ग्रेज–साम्राज्यले काठमाडौं – कुती बाटो नपाएर खोलेका हुन् । काठमाडौं उपत्यका अङ्ग्रेज सरकारले पाएको भए पूर्व र पश्चिमको आजको नेपाल स्वतः अङ्ग्रेज साम्राज्यको अङ्गमात्र हुने थिएन, बङ्गाल, बिहार र उत्तर प्रदेशको गृष्मकालीन राजधानीसमेत हुने थियो । दार्जिलिङ्ग, शिमला र नैनिताल आजको रूपमा देखापर्ने थिएनन् । गोरखनाथको कृपाले हो वा पृथ्वीनारायण शाहको दूरदर्शिताले हो चेपे, मर्स्याङ्दी र सुनकोशीको भू-भागलाई नेपाल राज्यको नाम दिएर काठमाडौंलाई यसको राजधानी बनाई पृथ्वीनारायण शाहले मेची-महाकालीसम्म फैलिएको नेपाल अधिराज्यको जग बसाले । यसै कारणले यस नेपाल राज्यको पहिलो राजा हामी पृथ्वीनारायण शाहलाई मान्दछौं । यसरी नेपाली राष्ट्र र राष्ट्रियताका जन्मदाता नेपालको पहिलो राजा पृथ्वीनारायण शाह र उनको वंशज नेपालको राष्ट्रियताको अस्तित्वसँग अभिन्न रूपले जोडिएको छ ।

त्यस समयको ६-७ वटा हिमाली राज्यको एकीकरण गरेर पृथ्वीनारायण शाहले पहाडी सैनिक शक्ति र काठमाडौंको समृद्धिको प्रयोग हिमाली राज्यहरूको एकीकरणमा गर्नुपर्छ भनी आफ्ना उत्तराधिकारीलाई दिव्य उपदेशद्वारा निर्देशन दिएकाले नेपाली राज्यविस्तार टिष्टादेखि काङ्गडासम्म सम्भव भयो । नेपाल दुई ढुङ्गाको तरूल हो, तरूल आफ्नै उर्वरा भूमिमा मात्र बन्न सक्दछ भन्ने सन्देशले पछिका नेपालनिर्माताहरू उत्तर-दक्षिणको सीमाविस्तारतिर लागेनन् । त्यस समयमा पूर्व-पश्चिमको माटो तरूलविस्तारको

लागि उर्वरा थियो र यसको विस्तार सम्भव भयो । गङ्गातिरको उर्वर भूमि अथवा ब्रह्मपुत्रतिरको सम्म भूमिको लोभ गरेका भए आजको नेपालको जन्म नहुने मात्र होइन त्यस सङ्घर्षमा पृथ्वीनारायण शाहले सिर्जना गरेको नेपालको समेत अन्त हुने थियो । 'नेपाल दुई ढुङ्गाका बीचको तरूल हो' भन्ने दिव्य राज-उपदेश आजका परराष्ट्रनीति-कारले समेत बुझ्नु आवश्यक छ। यो उपदेश नेपाली राष्ट्रियताको कवच हो ।

'यो देश साना दुःखले आर्ज्याको मुलुक होइन, सबैलाई चेतना भया' भन्ने दिव्य उपदेश सबै नेपालीले सधैं सम्झिनुपर्ने शिक्षा हो । यस शिक्षाले हाम्रो राष्ट्रियताको रक्षा गर्नेछ । उत्तरभन्दा दक्षिणका राजा (राज्य) लाई पृथ्वीनारायणले चतुर भनेका छन् र सधैं उनीहरूबाट चनाखो रहनु भनेका छन् । जाई कटक नगर्नू र दक्षिणबाट आउने व्यापारीले हाम्रो सम्पत्ति लाने हुनाले आफ्नै कला, संस्कृति र उपभोग्य वस्तुहरूको उत्पादन गर्नू भन्ने राजाको दिव्य उपदेश आज पनि राष्ट्रियताको सुरक्षाका लागि आवश्यक भएको छ । बढ्दो जनसङ्ख्याको चापले गर्दा हामीले हाम्रो जङ्गल मास्यौं र उर्वरा भूमिमा शहर बसाल्यौं । आज वातावरणविद्हरू भन्दछन् – नेपाल तराईको चारकोसे जङ्गल आवश्यक थियो, खाद्यान्नमा नेपालले स्वावलम्बी हुन पाखो जग्गामा मात्र घर बनाउनुपर्छ, खेत मास्नुहुँदैन ।

नेपाली राष्ट्रियता आत्मनिर्भर हुने हो भने आवश्यक छ – नेपालको पहिलो राजाको दिव्य उपदेशलाई हामी मनन गरौं र आत्मचिन्तन गरौं । यसरी मात्र राष्ट्र र राष्ट्रियता जोगिन सक्दछ ।





# श्री ५ बडामहाराज पृथ्वीनारायण शाह र नेपालको एकता दिवस

**– कुलचन्द्र कोइराला**

कुनै पनि ऐतिहासिक महापुरुषको जन्म हुनुमा युगको अनिवार्य माग रहेको हुन्छ भन्नुमा अत्युक्ति हुने छैन । हाम्रो हिन्दूदर्शनको महत्त्वपूर्ण ग्रन्थ गीतामा भनिएको छ :-

यदा यदा हि धर्मस्य ग्लानिर्भवति भारत ।
अभ्युत्थानमधर्मस्य तदात्मानं सृजाम्यहम् ॥

भगवान् कृष्णको उपर्युक्त उक्ति युगको ऐतिहासिक विश्लेषणको निम्ति ठूलो महत्त्व राख्दछ । हिन्दूजातिको समस्त जीवनपद्धति नै धर्ममूलक छ । अर्थात् धर्मको वास्तविक अर्थ समाजरचनामा समुचित क्रियाकलाप हुनु, श्रीवृद्धि, सुखशान्ति, स्नेह-ममता, देश तथा जातिको समुन्नतिमा निरन्तर योगदानका साथै सत्य, अहिंसा, दया, दान, इन्द्रियनिग्रह, अरूलाई दुःख, पीडा नदिईकनै स्वतन्त्र भएर बाँच्ने कुरा पनि हिन्दूजातिको धर्मभित्र नै पर्दछन् । महाभारतयुग यज्ञयागादि धार्मिक कृत्य नहुने, ऋषिमुनिहरू नभएको, सत्यता, पवित्रता आदिले शून्य युग होइन, त्यसबेला कृष्णजस्ता कूटनीतिज्ञ, परम मनीषीको जन्म हुनुमा युगको अर्कै आवश्यकता थियो, जसको दिग्दर्शन गर्नु यहाँ अनुचित हुने छैन ।

पञ्जाबमा धेरै काल बसेका आर्यहरूले विस्तारै भारतको समस्त भूभाग ढाके । सूर्य र चन्द्रवंशका राजकुमारहरूमा जेठाले बाबुको गद्दी पायो भने अरूले घना जङ्गल आबाद गरेर, अनार्य जनजातिलाई विजय गरेर ठाउँठाउँमा छुट्टाछुट्टै राज्य खडा गरे । समस्त उत्तरपूर्वी भारतमा यसरी आर्यराजाहरूको राज्यस्थापना भइसके तापनि दक्षिण भारतमा आर्यधर्मलाई नमान्ने विभिन्न जाति बस्तथे, जसलाई वैदिक धर्मद्वारा आबद्ध गर्न अगस्त्य, भारद्वाज आदि प्रभावशाली ऋषिहरूले दक्षिणापथको सशिष्य अभियान गरिसकेका थिए । तथापि राक्षस, वानर, ऋक्ष आदि जनजातिहरू ऋषिहरूका प्रयत्नबाट मात्रै वश नभएकाले सूर्यवंशी राजा रामचन्द्रले १४ वर्ष वनवास जाने निधो गरी दक्षिणापथको बाटो लिए । उनैद्वारा राक्षस जाति पराजित भयो । दक्षिणको शक्तिशाली वानर जातिका राजा बालि छलद्वारा मारिएकाले वानर र उसकै छत्रछायाँमा बस्ने ऋक्ष, गृद्ध आदि टोटम भएका जातिहरू आर्यधर्मको छायाँमा आए । समुद्रपारि बस्ने शक्तिशाली र वैज्ञानिक प्रविधिले युक्त राक्षसी समाजको नेतृत्व गर्ने राजा रावण जिउँदो छउञ्ज्याल उत्तरको मुखापेक्षी दक्षिण हुन सक्दैनथ्यो र वैदिक सनातन धर्मको दक्षिणमा स्थायित्व पनि सम्भव थिएन । अतः रावणको पनि समाप्ति गरियो र लङ्का पनि वैदिक धर्मको स्तम्भ बन्यो ।

रामचन्द्रभन्दा लगभग ४५ पिंढीपछिको महाभारतयुगमा भने नयाँ राज्य खडा गर्ने ठाउँ थिएन । जङ्गल, प्रान्त र जनजातिको समूह भएको उपयुक्त ठाउँ बाँकी भए

खाण्डववन अंशमा पाएर इन्द्रप्रस्थ राज्य खडा गरेजस्तै पाण्डवहरूले पुनः नयाँ राज्य खडा गर्ने थिए ।

साना-साना राज्यमा विभाजित भूभागले महाभारतकालीन राजाहरू सन्तुष्ट थिएनन् । नयाँ बढ्ने ठाउँ थिएन र नयाँ राजकुमारहरूलाई नयाँ राज्य बनाउने वैदिक कालदेखिको परम्पराको पनि परिसमाप्ति भइसकेकोले युद्ध अनिवार्य भइसकेको थियो । यद्यपि यसभन्दा अगाडि मान्धाता, सगर, भरत आदि प्रतापी चक्रवर्ती सम्राट् नभएका होइनन्, किन्तु उनीहरूले स-साना राजा-रजौटालाई विजयद्वारा करदमात्र तुल्याएर राखे, मूलोच्छेदन गरेनन् । एउटाको समाप्तिपछि पुनः यस्ता राजाहरू स्वतन्त्र भए । सूर्यवंशीको अयोध्या र चन्द्रवंशी (कुरुवंशी) को हस्तिनापुर मूल गद्दी भएकोले यहाँका शक्तिशाली राजाहरूलाई अरू राजाहरू सम्मानको दृष्टिले हेर्थे तापनि अधीनस्थ चाहिं थिएनन् । महत्त्वाकाङ्क्षी राजाको राज्यवृद्धिको लिप्सा पारस्परिक द्वेष, कलह, अहम्मन्यता, युद्धपिपासु प्रवृत्तिको व्यापकता नै अधर्मको उत्थान थियो । कसैको अर्ती, उपदेश, न्यायसङ्गत कुराहरू कोही सुन्न तयार थिएन । कृष्णको उपदेश र पाँच गाउँको मात्र आयस्ताले जीवन चलाउन पाऊँ भन्ने पाण्डवहरूको कुराको पनि सुनवाई भएन । हिन्दूधर्म र मर्यादाको विपरीत जन्मेका यी विचारधारा नै महाभारत युद्धका कारण बने । त्यो युगको विश्लेषण गर्दा युद्ध अनिवार्य थियो र भयो पनि ।

समस्त भारतवर्षका स्वाभिमानी राजा र राजवंशको समाप्तिपछिको वृहद् साम्राज्यको उदय नै धर्मस्थापना हो भनियो ।

त्यसपछि बुद्धकालीन भारतमा मगधको उदय, नन्दसाम्राज्य र सिकन्दरको आक्रमणपछि आवश्यक ठानिएको पश्चिमोत्तरको साम्राज्य सङ्गठनका साथै नन्दवंशको पतन र मौर्यवंशको उदयले एउटा युगको मागलाई पूरा गऱ्यो ।

कुषाण आक्रमणको आतङ्कले पीडित भारतमा गुप्तहरूको साम्राज्य पनि युगकै माग थियो भने श्रीहर्षपछिको बिखरावले गर्दा मुसलमानले भारतको प्रभुसत्ता हात लगाए ।

मुस्लिमसत्तापछिको अङ्ग्रेजी शासन भारतका लागि अभिशाप बनेर आएको भए पनि त्यस शासनव्यवस्थाका कतिपय कुराहरूले विशाल भारतको निर्माण गर्न वरदान पनि दिएको छ । भारतको राष्ट्रिय चेतनालाई जागरुक बनाउने र एउटा भारतीयलाई अर्कोसँग चिन्न-बुझ्न पाउने काम अङ्ग्रेजी भाषाले गरेको छ भन्नु अत्युक्ति हुँदैन र अङ्ग्रेजले आफ्नै लाभको निम्ति गरेका उद्योगधन्दा, कलकारखाना, बाटो, पुल तथा यातायातको व्यवस्थाले गर्दा भारतको एकीकरण र यति चाँडै विकास हुनसक्यो ।

**नेपाल र नेपालीहरू**

नेपाल भनेर पुरातनकालमा कतिलाई भनिन्थ्यो भनेर किटन सक्ने प्रमाण त अझै प्राप्त भएको छैन, तथापि कौटिल्यको अर्थशास्त्र[1], भरतको नाट्यशास्त्र, सुश्रुत र चरक संहिता, पुराणसंहिता, महाभारत बनपर्व, समुद्रगुप्तको प्रयाग-स्तम्भलेखले नेपालको परिचय दिन्छन् । त्यसमा पनि महाभारतको वनपर्व जसमा गढवाल विजयपछि कर्णले नेपाल पसेर नेपालका राजाहरूलाई पराजय गर्दै त्रिस्रोता पुगेर गङ्गामा खाँडो पखाल्न झर्दछन् भने समुद्रगुप्तको स्तम्भलेख 'समतट डवाक कामरूप नेपाल कतृपुर' भनेर प्रत्यन्त (छिमेकी)



देशको गणना गर्दा वर्तमान नेपालभन्दा अझ बढी भूभाग भएको नेपालको उल्लेख गरेका छन् ।

महाभारतमा नेपालका राजाहरू भनेकोले गढवालबाट कामरूपको सीमासम्मको क्षेत्रमा धेरै राजा थिए तर देशचाहिं नेपाल नै भनिन्थ्यो भन्ने थाहा हुन्छ ।

नेपालको विशाल क्षेत्रभित्र जालन्धर क्षेत्रको विजय गर्दै मानसरोवर क्षेत्रमा शासन गर्न पुगेका खश राजाहरू जुम्ला उपत्यकामा झरेर कालीपारदेखि काश्मीरसम्मको भूभागमा खशसाम्राज्य खडा गर्न सफल भए तापनि उनीहरूले आफूलाई जुम्लेश्वरमात्रै भने । इतिहासप्रसिद्ध नेपाल त्यसबेला खुम्चिएर त्रिशूली पूर्व र कोशी पश्चिमकै क्षेत्रमा सीमित रह्यो । अझ त्यो पनि टुक्रिएर एउटा-एउटा शहरकै मात्र राजा भएकोले नेपाल-मनमती-पश्चिम, वाग्मती उत्तर र त्रिशूली पूर्वसम्म ओगटेर बाँच्यो ।

जुम्लासाम्राज्यको पतनले स्वतन्त्र भएका सामन्तहरूले कर्णाली क्षेत्रमा बाईसी राज्य कायम गरे । साथै बाईसी राज्यमा पनि ठाउँ नपाएका सामन्तकुलका महत्त्वाकाङ्क्षी व्यक्तिहरू पूर्वतिर बढेर चौबीसी राज्य कायम गरे । यसबाहेक गुरुङ, मगर, तामाङ आदि जातिका सर्दारहरूको आ-आफ्नो क्षेत्रमा छुट्टै प्रभुत्व छँदैथियो । यस्ता गाउँले राजाहरूको पनि अस्तित्व स्वीकार गर्ने हो भने अर्को चौबीसी राज्यको गणना गर्न सकिन्छ ।

एउटा सिङ्गो नेपाल यसरी डोटी, बाजुरा, बझाङ, बैतडी आदि बाईसे र कास्केली, पर्वते, मुसीकोटे, धुर्कोटे, लमजुङे आदि नाउँले नेपालभित्रकै सानो-सानो परिधिभित्र राज्य खडा गरी स्वतन्त्र सत्ता स्थापित गरेकोले नेपाली जातिको अस्तित्व गाउँमा नै सीमित भयो र आ-आफ्ना विचारअनुसार चलाइएको शासनले वैदिक सनातन धर्मको परम्परागत मर्यादा र मान्यताको विलोप नै भयो । यसकारण कृष्णको उक्तिअनुसार धर्मस्थापनाका निम्ति ईश्वरीय अवतारको रूपमा कुनै महापुरुषको जन्म हुनु अनिवार्य नै थियो र गोर्खाको राजकुलमा संवत् १७७९ पौष शुक्ल परेवा वृहस्पतिवारका दिन एउटा महापुरुषको जन्म भयो ।

महापुरुषहरूको जन्म जे जस्तो ठाउँ, अवस्था, कुलमा भए पनि जन्मसाथ आएको दैवीप्रतिभा नै विशेष महत्त्व राख्दछ । शिक्षादीक्षा, अन्य साधन र साधनाले प्रतिभालाई चम्काउँछन्, शान लाएर धारिलो पारिदिन्छन्, यत्तिकै मात्र हो । जन्मजात प्रतिभाद्वारा नै महापुरुषहरू कुशलतासाथ युगको आवाज सुनेर समयको मागलाई बुझेर कार्य सम्पादन गर्दछन् ।

श्री ५ पृथ्वीनारायण शाहको शिक्षादीक्षा पनि साधारण नै थियो । युद्धकौशल, घोडचढी, कसरत, पौडी खेल्नु आदि विषय युद्धसँग सम्बन्धित हुँदा राजकुमारहरूलाई अवश्य सिकाइन्थे । पहाडको सानो राज्य गोरखा, यातायातको असुविधा र छिमेकी राज्यको बेलाबेलामा प्रकट हुने अविश्वसनीयताले गर्दा बाहिर गएर परम्परागत आएका राजघरानाका रीतिरिवाज, मानसम्मानका विषयवस्तु अध्ययन गर्ने मौका पनि थिएन । तथापि मुसलमान बादशाहका दरबारी काइदाहरू, मानमर्यादाका विशेषताहरू देख्न-सुन्न पाएका केही राजघरानाबाट गोरखाभित्र पनि आइपुगेका थिए । पाल्पाली सेन राजा मावली र मकवानी सेनहरू ससुराली भएको कारणले पनि त्यसवेलाको भारतमा प्रचलित मुगल

राजघरानाका रीतिरिवाजहरू अपनाउने सेन दरबारबाट गोरखा दरबारले पनि जान्ने मौका मिल्यो होला ।

यसरी साधारण शिक्षादीक्षा र साधारण रहनसहनमा हुर्केका श्री ५ पृथ्वीनारायण शाहको विशाल नेपालको निर्माण गर्ने सुपनाले निश्चय नै एउटा विशिष्ट प्रतिभाको तोप बन्दुकको प्रयोग गर्ने मल्ल तथा सेन राज्यलाई परास्त गरेर विशाल देश बनाउने आकांक्षामा निरन्तर यत्नशील रहेर उद्योग गर्नु निश्चय नै युगपुरुषकै कार्य हो । त्यस बेलाका प्रभावशाली राज्य सेन, कास्केली, लम्जुङे, पर्वते र काठमाडौं भक्तपुरका मल्ल राज्यका राजाहरूले न यस्तो सपना नै देखे, न त्यति ठूलो महत्त्वाकांक्षाले अगाडि बढेको नै थाहा हुन्छ । अरू बाईसी, चौबीसी राज्यहरूको नजीक पर्ने गाउँ, थूममात्र हत्याउने प्रयत्नभन्दा बढी साहस गरेको देखिंदैन । वाणिज्य, उद्योगधन्दा तथा तांबा-फलाम खानी आदि आयस्रोत बढाउने साधन गोरखामा थिएन । साधारण खेतीहर किसानले दिएको तिरोमात्र आयस्रोत भएको तथा कोषमा सञ्चित रकम पनि नगण्य भएको राज्यले युद्धसामग्री जम्मा गरेर सर्वत्र विजय गर्ने इच्छा राख्नु निश्चय नै आश्चर्य लाग्ने कुरा हो । गोर्खासँग थियो भने केवल दृढ आत्मविश्वास र मरिमेट्ने प्रवृत्ति तथा परम्परादेखि मानसम्मान पाउँदै आएका वंशज भारदारहरूको समूह । बाबुबराजुदेखि राजसेवा गर्दै आएको वंशबाटै फौजमा र प्रशासनमा तथा न्यायमा व्यक्तिहरूको नियुक्ति हुने परम्परा रहेकोले आफ्नो वंशलाई गौरव प्रदान गर्ने देश र राजमुकुटको निम्ति उत्सर्ग हुने भावना भएका फौजी जवानको दृढ आत्मबल नै सबैभन्दा ठूलो र महत्त्वपूर्ण शक्ति गोरखा दरबारको थियो ।

प्रभुशक्ति, मन्त्रशक्ति र उत्साहशक्ति राजतन्त्रका प्रमुख गुण मानिन्छन् । श्री ५ बडामहाराजाधिराजको दृढ नेतृत्व, विवेकवान् र विद्वान् मन्त्रीहरूको सल्लाह र अदम्य उत्साह भएका भारदारको शक्ति नै नेपालको एकीकरणका निम्ति ठूलो महत्त्व राख्दछ । ज्यानको पर्वाह नगरी युद्धमा होमिने र प्रायशः थोरै संख्याले ठूलो जमातको मुकाबिला गर्न गुरिल्लावारको नीतिलाई प्रयोगमा ल्याउने गोरखालीहरुको ठूलो जमातलाई पनि सजिलै परास्त गरेको गौरवमय गाथाले हाम्रो इतिहास भरिएको छ ।

श्री ५ पृथ्वीनारायण शाहकी जेठी मुमा चन्द्रप्रभा कुशल राजनीतिज्ञका साथै व्यावहारिक पक्षमा पनि प्रत्युत्पन्नमति भएकीले वहाँकै रेखदेखमा श्री ५ पृथ्वीको शिक्षादीक्षा भयो । राजोचित कुस्ती, घोडदौड, पौडी, युद्धकौशलका साथै राजनीतिको शिक्षा पनि समुचित रूपमा गरियो । १४ वर्षको उमेर पुगेपछि विवाहको निम्ति कन्याको तलास गर्दा त्यसबेलाको राज्यहरूमा तराईको जमीन र जङ्गलका अगणित हात्तीहरूको बिक्रीले प्रशस्त आय भएको मकवानपुरको सेन राजाकी कन्या इन्द्रकुमारीसँग विवाह सम्पन्न भयो । तराईको चलनअनुसार साना उमेरमा कन्याको विवाह भएता पनि घर जाने साइत चाहिं १६ वर्ष पुगेपछि नै गरिने हुँदा १२ वर्षकी छोरीलाई हेमकर्ण सेनले विदा गरेनन् । तीन वर्षपछि गौना (द्विरागमन) मा लिन जाँदा पनि जेठानसँग झगडा भएकोले रानी नलिईकनै श्री ५ को सवारी फर्क्यो ।

यसपछि दयाराम सिंह राजपुतकी कन्यासँग श्री ५ पृथ्वीनारायणको दोस्रो विवाह गोरखामा नै सम्पन्न भयो ।



सम्वत् १७९९ सालको रामनवमीका दिन श्री ५ नरभूपाल शाह दिवंगत भएपछि श्री ५ पृथ्वीनारायण शाहलाई राजगद्दी मिल्यो । आशौच सकिएको केही दिनपछि नै राज्याभिषेक कर्म पनि सम्पादन भयो ।

पहाडी राज्यहरूमा सानो राज्य क्षेत्र भएको गोरखाधिपतिले विशाल साम्राज्यको स्वप्न देख्नु नै आश्चर्यको कुरा थियो । किन्तु दृढ संकल्प र ठूलो आत्मविश्वास भएका गोरखालीहरूले सात राज्यमा बाँडिएको पूर्वी नेपाल र बाईसी, चौबीसी राज्यमा बाँडिएको पश्चिमी नेपाललाई एउटै बनाउने महत्त्वाकांक्षा राखे ।

पहाडी क्षेत्रमा युद्धका साधन ढाल, तरवार, खुँडा, खुकुरी, धनुषवाण मात्रै थिए । किन्तु तराईका क्षेत्र पनि राज्य विस्तार गरी मुगल साम्राज्यसँग सीमा जोडिएका राज्य तथा उपत्यकाभित्रको काठमाडौंले बन्दूक पनि युद्धसामग्रीमा सम्मिलित गरेका थिए । टाढैबाट मार गर्ने बन्दूक र तोपहरू त्यो बेलामा सम्पूर्ण हतियारहरूमा माथिल्लो ठाउँ लिन्थ्यो । पहाडी क्षेत्रको युद्धमा जहींतहीं तोप पुऱ्याउन सम्भव थिएन । तर बन्दूकको स्थिति चाहिं आधुनिक क्षेप्यास्त्रको जस्तै थियो ।

बन्दूक र बारुदले सेना सुसज्जित गरी छिमेकी राज्यभन्दा बलियो स्थितिमा पुग्न श्री ५ पृथ्वीनारायण शाहले तीर्थयात्राको बहाना गरी बनारसको यात्रा गरे । यो यात्रामा आफ्नो पूँजीले भ्याएसम्म बन्दूक बारुदकै व्यवस्था मिलाई फर्केको थाहा हुन्छ । लुकाएर ल्याउनु पर्ने बन्दूक, बारुद ल्याएकोले नै वरुणा वा गोमतीका तीरमा रहेका भन्सार चौकीसँग झगडा गरेको र सामान खोल्न नदिनको लागि नै काटमार गर्नुपर्ने स्थिति आइपरेको बुझिन्छ ।

मकवानपुरबाट फर्की चन्दागिरीबाट उपत्यकामा दृष्टिपात गर्दा मनभित्र उठेको भावना बुझी प्रश्नद्वारा सम्भव असम्भवको गणना गर्ने ज्योतिषीहरूले इच्छा पूर्ण हुन्छ भनेर श्री ५ पृथ्वीनारायणलाई उक्साएका थिए ।

विशाल राज्यका अधिपति पाल्पाली सेन मावली भएका र नेपाल उपत्यका विजय गर्ने आकांक्षा लिएका श्री ५ पृथ्वीलाई मामाले फौजी संगठन र सन्धिविग्रहका कुरा राम्ररी बुझाएका थिए । छिमेकी लमजुङ राज्य गोरखाको बढी रीस गर्ने र बलियो सैन्यशक्ति भएको हुँदा त्यससँग मैत्री सन्धि गर्नु आवश्यक थियो र पूर्व विजयले लमजुङेलाई असर नगर्ने हुँदा सजिलै सन्धि सम्पन्न भयो । गोरखाले उपत्यका विजय गर्ने कुरामा लमजुङेलाई विश्वास पनि थिएन ।

लमजुङेसँगको सन्धि जति महत्त्वपूर्ण थियो त्यस्तै जनमतको आधारमा कालु पांडेलाई प्रधान काजीको रूपमा नियुक्त गर्नु पनि श्री ५ को दूरदर्शिता नै थियो । द्रव्य शाहलाई निम्त्याई गोरखाधीश बनाउने ६ थरघरमध्येकै यो पांडेकुल हुँदा र उनैको वंशका वीर र बुद्धिमान् कालु पाँडेलाई प्रधान काजीको पदमा बहाल गर्दा सबै भारदारको चित्त खुसी नै भयो ।

नजीकका अरू छिमेकी राज्य तनहुँ र कास्कीले पनि लमजुङेसँग मैत्री भएमा तदनुरूप मित्रता स्वीकार गर्ने वचन दिएका थिएन । साथै नेपालका मल्ल राजासँगको संघर्षमा गोरखालीले विजय गर्ने सम्भावना छिमेकी राज्यले देखेका थिएनन् ।

पश्चिमी छिमेकीसँग मैत्री भाव कायम गरी श्री ५ पृथ्वीनारायणले सम्वत् १८०१ भदौमा उपत्यकाको प्रमुख पश्चिमी द्वार नुवाकोट विजयको निम्ति प्रस्थान गरे।

यो फौजको नेतृत्व स्वयं श्री ५ ले र मुख्य काजी कालु पाँडेले गरेका थिए। वर्षाको समय एक्कासि आक्रमण होला भन्ने नुवाकोटका सैनिकले कल्पना नै गरेका थिएनन्। साथै सिमानाको गोरखा राज्यलाई दुईपटक हराएर फर्काएका नुवाकोटेहरू आफू अग्लो डाँडामा बसेका र शत्रुले उकालो चढी हमला गर्नुपर्ने हुँदा आकस्मिक युद्ध हुने कुराबाट ढुक्क थिए।

दुईपटकको पराजयपछि चतुरा भएका गोरखालीले आफ्नो फौजलाई तीन भागमा बाँडेर आक्रमण गर्ने योजना बनाए। उत्तर पश्चिमको गेर्खु भन्ने डाँडो नुवाकोटभन्दा अग्लो पर्छ। त्यहाँबाट आक्रमण गर्दा गोरखाबाट युद्ध हारेबापत निकालिएका जयन्त रानाका पुत्र शङ्खमणिले कान्तिपुरको सेनाका सेनापतिको हैसियतले युद्ध गरे। यस युद्धमा उनी मारिएकोले बाँकी फौज भागेर बेलकोटगढमा शरण लिन पुगे। धर्मपानी (दक्षिण) र अशोकबारीमा (पूर्व) बाट बढेको सेनाले नुवाकोट कब्जा गऱ्यो।

यो विजय निकै नै उत्साहप्रद र महत्त्वपूर्ण थियो। परापूर्वकालदेखि उपत्यका र भोटको व्यापार चलेको थियो र भोट जाने घाटीमा सबैभन्दा होचो रसुवा घाटी (केरुङ) भएकोले यसबाट बाह्रै महिना भोटसँग सम्बन्ध राख्न सकिन्थ्यो। नून, सुन र अन्य सामान यसै मार्गबाट उपत्यकाभित्र पस्दथ्यो र नेपालका कयन् वस्तुहरू भोटमा पुग्थे। व्यापारी मार्गको यो नाका कब्जा हुँदा गोर्खालीलाई व्यापारी सुविधा र भन्सारको आम्दानी प्राप्त हुन्थ्यो भने उपत्यकाले नून खान पनि मुस्किल थियो। साथै नुवाकोटबाट उत्तरतर्फ छेकारो काटेर उपत्यकाभित्रका तीनवटै राजधानीलाई घेराबन्दी गर्न पनि सकिन्थ्यो।

नुवाकोटमा बलियो आसन जमाएपछि उपत्यकालाई घेराबन्दी गर्ने योजनानुसार नालदुम र महादेवपोखरीका चौकीहरू कब्जा गरियो। यसमध्ये नालदुम काठमाडौंले फर्कायो। गोरखालीले त्यसपछि काठमाडौंको उत्तर पश्चिममा पर्ने दहचोक कब्जा गरे। त्यसपछि कीर्तिपुरको असफल आक्रमण भयो, जुन युद्धमा वीर सेनापति कालु पाँडेले वीरगति प्राप्त गरे।

गोरखालीहरूको चकचकी बढेको देखेर बाईसी राज्यले शिर उठाए। उनीहरूलाई साम, दान, दण्डले थुम्थुम्याई उपत्यकाका दक्षिण भेकका फर्पिङ, बाँडेगाउँ, चापागाउँ, ठेचो, सुनागाउँ, बल्खु, सतङ्गल आदि गाउँ कब्जा गरेर उपत्यकाबाहिर पूर्वपट्टिका पलाञ्चोक दखल गरे, १८१८ मा काभ्रे पनि कब्जामा आयो। यसरी तीनतिरको मार्ग बन्द गरिदिएकोले उपत्यकावासीको दैनिक उपभोगका सामानहरूको पनि अभाव बढ्दै गयो। केवल मकवानपुरबाट आउने बाटो बाँकी बचेकोले श्री ५ पृथ्वीनारायण शाहले मकवानपुर विजयको कार्यक्रम बनाए।

यसबेला श्री ५ पृथ्वीप्रति सद्भावना राख्ने ससुरा हेमकर्ण सेन दिवङ्गत भइसकेका थिए र जेठान राजा दिग्बन्धन सेनसँग पहिलेदेखि नै झगडा चलेकै थियो। यसकारण श्री ५ पृथ्वीलाई मकवानपुर हमला गर्न हिच्किचाउनुपरेन।



सम्वत् १८१९ को भाद्र महिनामा उपत्यकाभन्दा दक्षिणको ठूलो राज्य मकवानपुर गढीमा आफ्ना भाइहरूको मातहतमा गोरखाली अनुभवी सेनानीहरू पठाएर आक्रमण गरे। युद्ध भएता पनि मकवानपुर विजय गर्न गोरखालीलाई गाह्रो परेन।

मकवानपुरको राज्यसीमा तराईमा कमला नदी, पहाडपट्टि दूधकोशी र पश्चिमपट्टि तिमाल – सिन्धुलीगढीको क्षेत्र पर्दथ्यो। मकवानपुरबाट भागेर पूर्वपट्टि बागमती किनारको डाँडो हरिहरपुरगढीमा शरण लिन पुगेका दिग्बन्धन सेनलाई त्यहाँबाट पनि लखेटी सिन्धुली र तिमालका कोट पनि दखल गरे। अब गोरखालीहरू गोरखाको चेपेदेखि पूर्व उपत्यकाबाहेक लगभग पचास कोसपूर्वको पहाडी क्षेत्र र पर्सादेखि कमलासम्मको तराई भागका अधिपति बन्न पुगे।

गोरखालीको यो अकल्पनीय विजयले त्रसित चौबीसीले पुनः युद्धको प्रयत्न गरे। परन्तु गोरखालीबाट उनीहरूले पराजय नै भोग्नुपऱ्यो। मकवानपुरगढीको विजयले बन्दूक, बारुद, गोलीगठ्ठा निकै नै हात लाग्यो। यसले गोरखालीको मनोबल निकै बढायो।

मकवानपुरको र बङ्गाल, बिहारका नवाब मीरकासिमको निकै राम्रो सम्बन्ध थियो। मकवानीको गुहारमा मीरकासिमले गुर्गीन खाँको नेतृत्वमा बेतियाबाट ठूलो मुस्लिम फौज मकवानपुर पठायो। पहाड र जङ्गलका युद्धको अनुभव नभएका मुसलमानी सेनालाई गुरिल्ला युद्ध गर्न सिपालु गोरखालीले सहजै परास्त गरे। सत्र सय मुसलमानी सेनाको निधन भयो। पचासजना जति पनि गोरखाली परेनन्। यस युद्धमा पनि तोप, बारुद, गोला, बन्दूकहरू धेरै मात्रामा गोरखालीको हात लाग्यो।

यसपछि काठमाडौंभन्दा पूर्वका धुलिखेल, चौकोट, बनेपा, पनौती आदि ठूला बस्तीहरू विजय गरेर साँगा भञ्ज्याङ पश्चिम मात्रमा उपत्यकाका तीन राज्यलाई घेरे।

१८२२ को असौजमा कीर्तिपुरसँग दोस्रो युद्ध भयो। यो पटक पनि सर्वत्र विजय गर्ने गोर्खालीले हार खाए।

चारैतिर गोर्खालीको नाकाबन्दी, उपत्यकाका तीन राज्य- काठमाडौं, ललितपुर, भक्तपुरको पनि आन्तरिक वैमनस्य र अस्थिर प्रशासनले गर्दा कीर्तिपुरेको पनि हौसला कम हुँदै गएको थियो। पहिलो युद्धमा जस्तो सहयोग पनि पाएनन्। एक दिन गोर्खालीको विजय हुन्छ भन्ने कुरा उपत्यकावासीले सोच्न बाध्य हुनुपरेको थियो।

कीर्तिपुरको दोस्रो युद्धपछि गोर्खालीले पनि भेदनीतिले काम लिए। नेपाली फौजका सरदार काजी धनवन्तका छोरा पक्रिएर नुवाकोटमा कैद गरिए। कीर्तिपुरका अनेक सेनानायकसँग भेदनीतिले आफ्नो पक्षमा मिलाई तेस्रो पटकको युद्धमा कीर्तिपुर सर गरियो।

कीर्तिपुर विजयपछि गोर्खाली सेनाले कीर्तिपुरेको नाक-कान काटेको वर्णन र नाक-कानको तौल १७ धार्नी भएको कुरा विदेशीहरूले उल्लेख गरेका छन्। श्री ५ पृथ्वीनारायणप्रति यस्तो अविश्वसनीय र अभद्र व्यवहारको दोषारोपण गर्ने पादरी जिसेप राजा जयप्रकाशको आश्रय पाई धर्म-प्रचारका निम्ति काठमाडौंमा बसेका थिए। राजा जयप्रकाशले उनैद्वारा अंग्रेजसँग सैन्य सहायता पनि मागेका थिए र जयप्रकाशको सहायतार्थ कप्तान किनलोफको नेतृत्वमा आएको अंग्रेजी सेना भदौ १ गते १८२४ (अक्टुबर १७, १७६७) मा प्रस्थान गरी लगभग ७ दिनमा सिन्धुलीगढी आइपुग्यो। त्यहाँ

गोरखाली सेनाको आक्रमणले ध्वस्त भएको अंग्रेजी सेना गोला, बारुद, तोप आदि धेरै हतियार छाडी भाग्न विवश भयो।

यसरी जयप्रकाशको मद्दतगार बनेका पादरीलाई उपत्यका विजयपछि श्री ५ पृथ्वीनारायणबाट निकालिबक्सियो साथै मौसूफबाट प्राप्त गरिबक्सेका चर्चहरू पनि कब्जा गरिबक्सी अर्कै काममा लगाइबक्सेकोले यो आक्षेप बढाई-चढाई लेखेका छन्।

आफू दलबलसहित निकालिएका पादरीले श्री ५ पृथ्वीप्रति राम्रो धारणा राख्दैनथे भन्ने कुरा स्पष्टै छ। तेस्रो कीर्तिपुर विजयको बेला श्री ५ पृथ्वीनारायण शाह नुवाकोट दरबारमै होइबक्सन्थ्यो। यसकारण कीर्तिपुरेको नाक, कान काट्ने हुकुम दिने कुरा व्यर्थ बकवास भन्नुपर्छ। साथै १७ धार्नी नाक, कानको तौल पुऱ्याउन पाँच हजार मानिसको नाक, कान काट्नुपर्ने हुन्छ। त्यति ठूलो जनसंख्या आजको कीर्तिपुरमा पनि छैन। यसकारण पादरी साहेबको दोषारोपण गलत छ। उत्तेजित सेनाका जवानहरूबाट २/४ केस भयो होला। यस्तो सानोतिनो घटना युद्धमैदानमा नघट्ने होइन। सिपाहीले गरेको केही उद्दण्डता भए पनि १० कोश टाढा बस्ने राजालाई थाहा हुन सक्दैन र तुरुन्त आज्ञा हुन सक्ने सम्भावना नै छैन।

श्री ५ पृथ्वीनारायण शाहको क्रियाकलाप, सूझबुझ र विजित जनताप्रतिको सद्व्यवहारले नै नेपालको एकीकरण हुन सक्यो र विजित क्षेत्रका जनताले राजा बदलिएको कटु अनुभव गर्ने मौका पाएनन्।

चारैतिरको नाकाबन्दीले उपभोगका सामग्रीको बढ्दो अभाव र उपत्यकाका तीन राज्यको अस्थिरता, कलह, बेलाबेलामा हुने आपसी आक्रमण र प्रत्याक्रमण एवं राज्यभित्रकै भाइभारदारको षड्यन्त्रले हुने अशान्ति, असुरक्षाको भावनाले उपत्यकावासीहरू वाक्क भइसकेका थिए। एउटा शक्तिशाली, धर्मनिष्ठ राजाको छहारीमा बसेर शान्तिपूर्ण जीवन बिताउन खोज्नु स्वाभाविक थियो। देशको धर्म, संस्कृति र सामाजिक जीवनमा खलल नपर्ने र सुदृढ शासनका मुनि निश्चिन्त जीवन यापन गर्ने मोहले काठमाडौंका जनता भित्रभित्रै गोरखालीप्रति समर्पित भइसकेका थिए। लगभग २५ वर्षको युद्धकौशलको अनुभव लिएर परिपक्व भइसकेका राजाले तरबारले भन्दा स्नेह, मैत्री, साम, दानद्वारा भएको विजय नै चिरस्थायी हुने कुरा राम्ररी बुझेर काठमाडौंका जनताको मन जितिसकिबक्सेको थियो।

कुमारीको रथयात्रामा संलग्न राजा, तमासा हेर्न भेला भएका शहरका जनता, रथ र राजाको सुरक्षामा सम्मिलित फौजको पर्वाह नगरी तीनतिरबाट दलबलसहित श्री ५ पृथ्वीनारायण शाहबाट काठमाडौंमा प्रवेश गरिबक्सँदा विरोध गर्ने एकजना नेपाली पनि निस्केन।

आफ्नै राज्यमा आफ्नै जनता र फौजको बीचमा राजा जयप्रकाश मल्लले असुरक्षाको अनुभव गरेर भाग्नुपऱ्यो। राजा जयप्रकाश मल्ल बस्न ठीक पारेको, सयौं वर्षदेखि मल्ल राजाहरूले बस्ने गरेको राजसिंहासनमा श्री ५ पृथ्वीनारायण शाह राज भएर सलामी लिइबक्सँदा नेपाली जनताले स्वागत अभिवादन नै चढाए।

धर्म, संस्कृतिको मर्म बुझेर समादर गरिबक्सने क्षत्रिय राजाले बाँडाकी पुत्री कुमारीलाई देवीकै रूपमा हेरेर पादाभिवादन गरिबक्सेकोले पनि राजा बदलिएको अनुभव नेपाली जनताले गरेन। इन्द्रजात्राको समारोह पूर्ववत् नै चल्यो।



१८२५ साल भाद्र ९ गते अनन्त चतुर्दशी (२५ सितम्बर १७६८ रविबार) का दिन मध्यरात्रितिर प्रवेश गरी बिना रक्तपात काठमाडौं विजय गरेको इतिहासले नै श्री ५ पृथ्वीनारायणको कूटनीति, दृढता र चरित्रबलको विशेष व्याख्या गर्छ।

यसरी काठमाडौं विजय भएपछि डरले पाटनका राजासहित जयप्रकाश मल्ल भागेर भक्तपुरको शरणमा गएकोले पाटन बिना युद्ध नै हात आयो। भक्तपुरले शरण परेका राजा बुझाउन नचाहेकोले कार्तिक शुक्ल एकादशी १७७१ ईस्वी सन्का दिन भक्तपुरमा आक्रमण गरी विजय गरियो।

अब प्राचीन ऐतिहासिक कालको विशाल नेपाल बनाउने योजनामा पूर्वपट्टि दुइटा सेन राज्य बाँकी थिए र पश्चिमपट्टिका चौबीसी र बाईसी राज्यहरू। काठमाडौं र पाटन विजयपछि पश्चिम अभियानमा केही सेना पठाइए तापनि युद्ध सफल भएन।

पूर्वतर्फ मकवानपुर विजयले सुनकोशीको दक्षिणी भाग दूधकोशीसम्म सिमाना पुगेको थियो र मल्लराजाको पराजयपछि कोशीभन्दा उत्तरका मल्लराजाका अधीन पहाडी क्षेत्र पनि स्वतः हात लागे। अब दूधकोशीपारि माझकिराँतको प्रशासन गर्ने चौदण्डी सेन राज्य तथा विजयपुरको सेन राज्य बाँकी थिए। रामकृष्ण कुँवर तथा अमरसिंह थापाको नेतृत्वमा गएको फौजले हरिनन्दन पोखरेल आदिको[१२] सहायताबाट दूधकोशी पार गरी दिङ्ला भोजपुर आदि माझकिराँत क्षेत्र, उत्तर तिब्बतको सिमानासम्म नै आफ्नो अधीन गराए। पहाडी क्षेत्रको सँध अरुण नदीसम्म पुगेपछि पल्लोकिराँत (लिम्बूआन) विजयपुर राज्यअन्तर्गत हुँदा बाँकी रह्यो। त्यस्तै सुनकोशी दक्षिण महाभारतको क्षेत्र, दक्षिणको भावर (भित्री मधेश) र तलहट्टीक्षेत्र विजय गर्न बाँकी नै हुँदा मकवानपुरमा बसेका अभिमान सिंह बस्नेत र सरदार पारथ भण्डारीको नेतृत्वमा चौदण्डी सेन राज्य र विजयपुर सेन राज्य विजय गर्न श्री ५ को हुकुम पाई प्रस्थान गरे।

मकवानपुरका सेन राजाको राज्य चितौनको लोथर र पर्सादेखि पूर्व टिष्टासम्म र पहाडमा सिक्किमको सीमासम्म फैलिएको थियो। सेन राजा राघव सेनका पुत्र हरिहर सेनका पालासम्म यस्तै रह्यो। हरिहर सेनका छोराहरूको राज्य कलहपछि रातु नदीको सीमा लगाएर पूर्व वर्तमान जनकपुर लगायत विजयपुर मोरङ्ग राज्यमा र रातु पश्चिम महोत्तरी, सर्लाही, बारा, पर्साको तलहट्टी र पहाडमा तिमालदेखि बाहाडरा खोलासम्म मकवानपुर, त्यसभन्दा पूर्व सिक्किमसम्म विजयपुर राज्य गरी हरिहर सेनले छोरा शुभ सेन र इन्दुविधाता सेनलाई बाँडिदिएका थिए। सं. १७६४ तिर शुभ सेन र विजयपुरका राजा इन्दुविधाता सेन जनकपुरमा विभिन्न भारदारहरूको षड्यन्त्रमा परी पक्रिएर दिल्ली पुऱ्याइए। उनीहरूलाई वहीं मुसलमान बनाइयो। त्यसपछि राजा शुभ सेनका छोरा माणिक सेनलाई मकवानपुर र कान्छा महिपतिलाई मोरङ्ग विजयपुरको गद्दीमा बसालियो।

राजा माणिक्य सेनका छोरा हेमकर्ण सेनका पालामा विजयपुरका राजा र दीवानको झगडा परेकोले हेमकर्ण सेनका भाइ जगत सेनलाई लिम्बूहरूले लगी विजयपुरको राजा थापे। त्यसबेला जगत सेन पूर्वी क्षेत्र सप्तरी र माझकिराँतको प्रशासन गर्न अम्वरपुरमा बस्तथे। जगत सेनको प्रयासबाट लिम्बू मन्त्री र राजा कामारीदत्त सेनको मेलमिलाप भएकोले विजयपुरको सहयोगबाट कोशी पश्चिम, कमलापूर्वको तराई र माझकिराँत उदयपुर जिल्लाको मगराँत क्षेत्रको छुट्टै राज्य खडा गरी चौदण्डीमा राजधानी बनाए।

जगत सेनका छोरा मुकुन्द सेन चाँडै दिवंगत भएकाले जगत सेनका भाइ विक्रम सेन चौदण्डीका राजा भएका थिए र उनीपछि छोरा कर्ण सेन राजा भएका थिए।

उनीद्वारा भक्तपुरे राजकुमार र पाटने प्रधानहरू मिलेर गरेको षड्यन्त्र विफल भएपछि तथा माझकिरांतको कोशी उत्तरको भाग गोरखालीले हात लाएपछि चौदण्डीका राजा भागेर विजयपुर पुगेका थिए। मन्त्री र राजारहित चौदण्डी सजिलै हात पऱ्यो।[१३]

यसपछि त्यसै सालको वर्षा ऋतुमा विजयपुरमा आक्रमण गरियो। कर्ण सेन पहिले नै जहानबच्चा लिएर पूर्णियाँ गएका थिए। विजयपुरका मुख्य मन्त्री बुद्धिकर्ण राईले गोरखाली सेनाको केहीछिन मुकाबिला गरी भागेकोले विजयपुर सर भयो।

सेन राजा र लिम्बू भारदारबीच बराबर कचिङ्गल परेर राज्य कमजोर भएको मौका पारेर इलाम क्षेत्र सिक्किमले हात लगाई पल्लोकिरांतका लिम्बूलाई पनि दुःख दिइरहेकोले गोरखालीको विजयपुर विजयपछि पल्लोकिरांतका लिम्बूहरू मिलाएला दश लिम्बूआनका लिम्बूहरूले गोरखाको छत्रछायाँमा रहन मञ्जुर गरेकोले गोरखालीहरू बढ्दै गएर विजयपुरको पुरानो अधिकारक्षेत्र च्याङ्थापुसम्म नै अधिकार जमाए।

गोरखालीले सर्वत्र विजय गर्दै आएको सुनेर डराएको सिक्किमले सन्धि गर्न मानिस पठायो। कन्काई र टिष्टाबीचको तलहट्टी, जुन पहिले विजयपुरकै राज्य थियो र सिक्किमले पछि हात लगाएको थियो, त्यो क्षेत्र गोरखालीलाई सुम्पी सिक्किमले सन्धि गऱ्यो।

यसरी श्री ५ पृथ्वीनारायण शाहको नेपाल एकीकरण गर्ने सपना - १. काठमाडौं २. पाटन ३. भक्तपुर ४. मकवानपुर ५. चौदण्डी ६. विजयपुर राज्यका राजा उन्मूलन गरी पूर्वीय क्षेत्र र तराईको विस्तृत मैदानको भूभागको एकीकरण गरी पूरा भयो। अब गोरखालीका लागि धन, जन, हतियारको कमी रहेन। विशाल नेपाल बनाउने गोरखालीका अगाडि बाईसी र चौबीसी राजाहरू हात्तीका अगाडि स्यालजस्तै थिए। उनीहरूको विजय गर्ने कार्य श्री ५ को जीवनमै हुन नसकेता पनि यो विजयको लागि जबर्जस्त भूमिका तयार भइसकेको थियो, जुन कार्य उत्तराधिकारीले पूरा गर्न त्यति कठिनाइ परेन।

### श्री ५ पृथ्वीनारायण शाहको विशेषता र विजयका कारणहरू

१) श्री ५ बडामहाराजको अदम्य उत्साह, दृढ संकल्प र भाइभारदारप्रतिको स्नेह र ममताले नै सानो गोरखा राज्य विशाल नेपालमा परिणत भएको हो। युद्धमा वीर गति पाउने योद्धाहरूका परिवारले 'मरवट' जीविका पाएर सजिलैसँग जीवनयापन गर्ने हुँदा मरिमेट्ने सैनिकहरू पारिवारिक चिन्ताबाट मुक्त थिए। साथै वीर योद्धाका छोराहरूलाई शिक्षादीक्षा, तालिम दिएर उमेरदार भएपछि सेनामा प्रवेश गराई कामअनुसारको माम र मान पाउने हुँदा कसैले जहान छोराछोरीको लागि सञ्चय गर्नु परेन।

द्रव्य शाहदेखि नै पुस्तौनी राज्यको नूनगुनले जीविका चलाउने भाइभारदारहरू उपर्युक्त कारणले गर्दा सर्वदा देश र राजमुकुटप्रति समर्पित रहन्थे।

अर्थको अभाव, हतियारको अभाव र योद्धा सिपाही पनि पर्याप्त राख्न नसक्ने गोरखाले विजयको लागि प्रशस्त जनसहयोग लिएको थियो।

२) गोरखाका गाइनेहरू विभिन्न राज्यमा पुगेर गोरखानरेशको बुद्धिमत्ता, जनप्रियता, कुशल प्रशासन र वीरताको गुणगान गर्दै विरोधी राज्यका प्रजावर्गमा



गोरखाप्रति श्रद्धा र आस्था जगाउने काम गर्थे, युवकहरूलाई सेनामा भर्ना भएर युद्धमा भाग लिन उत्साह जगाउँथे। मागी मागी खाएर गाउँघर घुम्ने गाइनेको यो सहयोग पनि एकीकरणको निम्ति महत्त्वपूर्ण थियो।

३) श्री गोरक्षनाथको कर्मभूमि मानिने गोरखा र वरपरका गोरखपन्थीहरूले निःशुल्क गुप्तचरको कार्य पूरा गरिदिन्थे। बराँठको सिङ फुकेर भूत बाँधौं, प्रेत बाँधौं भन्दै घरघर घुमेर 'फेरि' लगाउने कनफट्टा योगीहरूले गुप्त भाषामा श्री ५ पृथ्वीनारायण शाहको सन्देश, विराना मुलुकमा चियो गर्न र चौकी खडा गर्न पसेका गोरखालीलाई दिन्थे। राती राती घर घुम्ने हुँदा जुनसुकै घरमा लुकेर बसेका भए पनि सन्देश सुन्थे र अह्राएको काम गर्थे, तथा भेट्नुपरे सुरुक्क निस्केर राती जोगी भेट्ता देख्ने कोही हुँदैनथ्यो। वैरी कहाँ छ, के गर्दैछ, कति जवान छन्, के कस्ता हतियार छन् भन्ने कुराको संकेत यिनै 'फेरि' लाउने जोगीको भटयाईंबाट बुझेर योद्धाहरू काम गर्थे।[१४]

अकल्पनीय गुप्तचरी गर्ने अवैतनिक कनफट्टा योगीहरूलाई गाउँ एरिया बाँडी त्यस क्षेत्रको आम्दानीले जीविका गर्ने व्यवस्था बाँधिदिएका थिए भने कसैलाई यसबापत वेख, विर्ता पनि दिएका थिए। श्री योगी भगवन्तनाथलाई राजसी मान्यता र मर्यादा दिएर सहयोग प्राप्त गरेको कारणले पनि बाईसी चौबीसी राज्यमा बस्ने गोरखपन्थीहरू पनि गोरखाप्रति समर्पित भएका थिए।

४) आफ्नो राज्यभन्दा बाहिर शत्रु देशका व्यक्तिहरूमध्ये को प्रभावशाली छ; को वीरयोद्धा छ, को विर्तावार धनी छ, त्यसको आँकडा लिएर गुप्तरूपले चिठीपत्र गरी शिरोपाउ दिएर, योग्य मानमर्यादा दिएर आफूतिर मिलाउने प्रयत्न गर्थे।

मकवानपुर विजय गरेपछि, सेन राजाहरूद्वारा वेख (वेश) विर्ता, छाप, मानाचामल पाएर किरांत, लिम्बूआन, सुनुआर, मगर आदि जातिको बसोबास भएको एरियामा राज्यको उमराव एजेन्सी भएर रहेका ब्राह्मण, क्षेत्री र अन्य जातिलाई पनि चिट्ठीपत्रद्वारा नुवाकोट बोलाएर सहयोगको निम्ति आग्रह गरेका थिए र खाइपाई आएका वेखविर्ता यथावत् थामी अरू पनि सहयोग गरेबापत मानइज्जत र विर्ता दिने आश्वासन दिएका थिए।

सेन राजाबाट विर्ता पाई सिन्धुलीनजीक हैवारमा बस्ने कोइरालाहरू[१५], बितिजोरका पौडेलहरू, खनीयाँखर्कका उमराव, गोदार थापाहरू, विजयछापका राना र थापा मगरहरूलाई नुवाकोटमा बोलाई सहयोग लिएर उनीहरूको खानपान थामिदिएको लालमोहरबाट जानिन्छ।

सुनकोशीभन्दा उत्तरको रामेछाप, दोलखा, ओखलढुङ्गा क्षेत्र मल्ल राजाको अधीन थियो। त्यस क्षेत्रका ब्राह्मण, क्षत्रीलाई पनि आफ्नो पक्षमा मिलाएका थिए।

मल्ल राज्यअन्तर्गत पर्ने हाल रामेछाप जिल्लाको मुँगीटार भन्ने गाउँ पर्साई ब्राह्मणहरूले मल्ल राजाबाट विर्ता पाएका थिए। त्यस बेलाका विर्तावार रामचन्द्र पर्साई धनीमानी व्यक्ति हुँदा आफ्ना पक्षमा सहयोग गर्न श्री ५ बडामहाराज पृथ्वीनारायण शाहले अह्राइबक्सेको थियो।

जयप्रकाशको निम्तामा अंग्रेजी फौज सिन्धुलीगढीको बाटो भएर आउँदैछ भन्ने खबर पाएका रामचन्द्रले अंग्रेज आउंछ भन्छन्, के गर्ने भनेर बिन्तीपत्र लेखे । शायद यो खबर काठमाडौंका मल्ल दरबारबाट उनले पाएका होलान् ।

रामचन्द्र पर्साईलाई श्री ५ बडामहाराज पृथ्वीनारायणबाट एउटा महत्त्वपूर्ण पत्र लेखिबक्सियो । त्यसमा भनिएको छ- जयप्रकाशले यो मुलुक खाया पनि मैले खाया पनि उस्तै कुरा हो तर फिरङ्गी भन्याको आर्कै हो त्यो चढ्या पछि हामीहरूकै राम्रो हुन्या छैन । तसर्थ जनधनले मद्दत गरी फिरङ्गी लखेट्न्या काम गर्न्या छौ । चाहिएको खर्च पनि दिन्या छौ, काम फत्य भएपछि रुपैयां पनि दिउंला, शिरोपाउ बकस बिर्ता पनि दिउंला भन्ने आशयको पत्र लेखिबक्सियो ।[१६]

यस्तो कुरा मल्ल राजाले पनि बुझेका भए गोरखा विरुद्ध अंग्रेजलाई निम्त्याउने थिएनन् होला ।

रामचन्द्रले सिन्धुलीको लडाईंमा चाहिने खर्च र रसद पानीको मद्दत पनि गरे । यस कार्यबापत उनको खानपान बिर्ताको थमौती भयो । बढी कुरा पनि पाए होलान् । अनि उनले युद्धमा लागेको रुपैयाँ मागेनन् । रामचन्द्रका सन्तानसँग रहेको तमसुकको रुपैयाँ २०१३ सालमा चुक्ता गरियो ।

यस्तै चौदण्डी राज्यका बिर्तावार हरिनन्दन पोखरेलले पनि नुवाकोटमा नै आई तन, मन, धनले सहयोग गर्ने बचन दिएका थिए । किरांत विजयमा डुंगा बनाई दूधकोशी तर्ने सहयोगको साथै भरिया, रसदपानी र अन्य खर्चका निम्ति पटकपटक गरी ११०५१।- रुपैयां दिएबापत माझकिरांतको मझुवाधुम (खार्पा कुभिण्डे) आदि र तराईमा प्रगन्ना खालिषाका सिर पहाड दक्षिण, उत्तर त्रिजुगा नदी, कोशी दोभान, कञ्चनपुर र पुराना गढीबाट उत्तर पौडा नदीको शिर आदि चौहद्दी बांधी बहेरिनी र आबादीसमेत ससीम कुश बिर्ता र पकरी प्रगन्नाको चौधराई समेत दिने व्यवस्था गरियो ।

पू. ४ नं. खुट्टा बिर्ताका कोइरालाहरूलाई सहयोग गरेबापत बिर्ता थमौतीका साथै पञ्चखत मुद्दा हेर्ने अधिकार पनि दिएको प्रमाण पाइन्छ ।[१७] यस्तै नेपाल विजयको निम्ति नेपालकै गुभाजुहरूलाई उग्र पुरश्चरण गर्न तयार गरे भने पशुपतिका पुजारी भट्टलाई नेपाल विजयको निम्ति पुरश्चरण गराउन लगाएका थिए र यो कुरा थाहा पाएर राजा जयप्रकाशले भट्ट पुजारी खोसी सन्यासीहरूलाई पूजाको काम दिएका थिए ।[१८]

यसरी साम, दान, दण्ड, भेदका नीतिहरू प्रयोगमा ल्याएर सूझबुझ पुऱ्याएर काम गरेकोले नै नेपाल एकीकरण हुन सक्यो ।

हरिनन्दन पोखरेललाई सहयोगी बनाए तापनि उनको गतिविधि बुझ्न बांग्या बस्नेतलाई माझकिरांत पठाएका थिए भने नुवाकोटमा नै छँदा पूर्वी क्षेत्रको गतिविधि बुझ्न पं. विश्वेश्वर अर्याललाई देश निष्काशनको बहाना गरी चौदण्डी राज्यमा पठाए । उनले आफ्नो विद्वत्ता र कार्यकुशलताले सेन राजाका विश्वासी बनेर तराई क्षेत्र सप्तरीमा ५०० बिगाहा बिर्ता पाए । छथरघरभित्रका व्यक्ति हुँदा गतिविधिको रिपोर्ट अवश्य नै श्री ५ बडामहाराज पृथ्वीनारायण शाहलाई गरे र चौदण्डी गोरखालीले विजय गरेपछि सेनले दिएको बिर्ताको थमौती र अरू पनि लाभ गरे । वयवी बिर्ताको नामले आज पनि विश्वेश्वर अर्ज्यालका सन्तानहरू भोग गर्दैछन् ।[१९]



उपर्युक्त कुरा र यस्तै अनेकौं घटनाहरूको प्रमाणबाट श्री ५ बडामहाराज पृथ्वीनारायण शाह वीर योद्धामात्रै नभएर महाभारतका कृष्णजस्तै कूटनीतिज्ञ, विवेकवान् थिए र यस्ता महान् विचारका युगपुरुषको अवतार भएकोले नै नेपाल र नेपाली जातिको गौरव बाँचेको छ । अन्त्यमा मौसूफको जन्मजयन्तीको यस महान् पर्वमा मौसूफप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछु ।

**सन्दर्भस्रोत**


१) कौटिल्यको अर्थशास्त्र
२) महाभारत वन पर्व अ. २५४
३) समुद्रगुप्तको प्रयागस्तम्भ - लेख - वासुदेवशरण उपाध्याय, गुप्तकालीन अभिलेख ।
४) श्री ५ पृथ्वीनारायण शाहको संक्षिप्त जीवनी - १ भाग, बाबुराम आचार्य
५) ऐ ऐ
६) ऐ ऐ
७) वंशावली
८) श्री ५ को दिव्योपदेश ।
९) बालचन्द्र शर्मा - नेपालको ऐतिहासिक रूपरेखा ।
१०) ऐ ऐ ऐ
११) ऐ ऐ ऐ
१२) हरिनन्दन पोखरेललाई अभिमान सिंह र पारथ भण्डारीले लेखेको पत्र श्री ५ पृथ्वीनारायण शाहको सं. जीवनी ३ भाग पृ. ६२०
१३) श्री ५ पृथ्वीनारायण शाहको जीवनी ३ भाग बाबुराम आचार्य ।
१४) कनफट्टा योगीहरूलाई गरिदिएको लालमोहर, संग्रहकर्ता मोहन प्र. खनाल
१५) १८२० को नुवाकोटबाट गरिदिएको लालमोहर - प्रज्ञा अंक ६२ पृ. ५०
१६) रामचन्द्र पर्साईलाई गरिदिएको लालमोहरसंग्रह - मोहन खनाल ।
१७) लेखकका संग्रहमा रहेको पत्र ।
१८) नेपालका शाहकालीन अभिलेख - धनवज्र र टेकबहादुर ।
१९) प्रज्ञा अं. ४० पृ. २ सं. ईश्वर बराल ।


(साभार : दिव्योपदेश)

# गोरखाराज्यको उन्नतिको मूल कारण योग्यताको पहिचान

**– विनेशराज पन्त**



लिच्छविकालदेखि नै गोरखाप्रदेशको विशेष महत्त्वपूर्ण स्थान रहेको देखिन्छ । अहिलेसम्मको खोजीले गोरखाभन्दा पश्चिममा लिच्छविकालका अभिलेख पाइएका छैनन् । राजा शिवदेव (द्वितीय) र उनका छोरा राजा जयदेव (द्वितीय) का एक-एकवटा शिलापत्र गोरखामा पाइएका छन् ।[1]

ती शिलालेखबाट लिच्छविकालदेखि नै गोरखामा धार्मिक समन्वयको राम्रो उदाहरण पाइएको छ । एकातिर वज्रभैरवनामक वज्रयानी देवताको अस्तित्व त्यसबेलाको गोरखामा हामी पाउँछौं[2] भने अर्कोतिर महादेवको अस्तित्व पनि त्यसबेलाको गोरखामा पाइन्छ ।[3]

लिच्छविकालपछि विक्रमको तेह्रौं शताब्दीसम्म केन्द्रको शासनअन्तर्गत नै रहेको उल्लेख पाइएको गोरखाप्रदेश[4] विक्रमको चौधौं शताब्दीमा सिंजाको मल्लराज्यको शासनअन्तर्गत पर्न आयो ।[5] त्यसपछि डोटी राज्यअन्तर्गत केही काल रहेको गोरखाप्रदेश[6] यक्ष मल्लको पालामा फेरि केन्द्रको शासनअन्तर्गत पर्न आयो ।[7] वि. सं. १५८१-१५८२ मा नेपाल खाल्डोमा भएको पाल्पाली राजा मुकुन्द सेनको हमलापछि पाल्पाको अधिकारमा आएको गोरखाप्रदेश[8] सेन राज्य कमजोर भएपछि स्थानीय शासकको अधिकारमा रहन पुग्यो ।[9] वि. सं. १६१६ मा लमजुङका राजकुमार द्रव्य शाहले गोरखाराज्य खडा गरेपछि[10] यसको स्वतन्त्र राज्यको रूपमा अस्तित्व रहन आयो । द्रव्य शाह, पूर्ण शाह र राम शाह यी ३ राजाको परिश्रमले जोडिएको[11] गोरखाराज्यलाई जोगाउन छत्र शाहलगायत सबै

---

[1] गोरखाको इतिहास (तेस्रो भाग) का ६४३-६६४ पृ.

[2] गोरखाको इतिहास (पहिलो भाग) का ६-७ पृ.

[3] ऐजन ८ पृ.

[4] ऐजन ११-१४ पृ.

[5] ऐजन १५-१९ पृ.

[6] गोरखाको इतिहास (चौथो भाग) का १०७३-१०७४ पृ

[7] गोरखाको इतिहास (पहिलो भाग) का २०-२१ पृ

[8] ऐजन २२-२३ पृ.

[9] ऐजन २४-२५ पृ.

[10] ऐजन ५०-५१ पृ.

[11] ऐजन ४८-५५, ६७-७०, ९०- ९७ पृ



गोरखाली राजाले केही न केही परिश्रम गर्नैपर्‍यो । कुनै-कुनै राजालाई त गोरखाराज्य थाम्न पनि निकै धामा पर्‍यो ।[12]

आफ्ना छिमेकी राज्य विशेष गरी लमजुङबाट गोरखा सधैं आक्रान्त भइरहन्यो र **लम्जुन् भन्याको गरूड हो**[13] भन्ने श्री ५ पृथ्वीनारायण शाहले लमजुङलाई गरूड र गोरखालाई सर्प भनी[14] लमजुङलाई गोरखाभन्दा निकै बलियो राज्यको रूपमा चित्रण गर्न पुगे । लमजुङमात्र होइन, कास्की पर्वत आदि राज्य पनि गोरखाभन्दा बलिया थिए । नेपाल खाल्डोका तीन राज्य काठमाडौं, पाटन, भक्तपुर त कलाकौशल धनधान्यले पनि समृद्ध थिए । अर्कातिर मकवानपुर, तनहुँ, पाल्पा आदि तराईप्रदेशले सम्पन्न राज्यहरू पनि थिए । तर यी राज्यले नेपाल एकीकरणको अभियानलाई अघि बढाउन सकेनन् र यसको नेतृत्व गर्ने सौभाग्य गोरखाले पायो । गोरखाराज्यमा भएको योग्यताको कदर गर्ने बानीले यो सम्भव भएको हो । कप्तान नक्ससँग काठमाडौं आएका डाक्टर ह्यामिल्टनले पृथ्वीनारायणमा उचित फैसला गर्ने बानी थियो भनी लेखेको कुरा[15] यस प्रसङ्गमा स्मरणीय छ । यस सानो निबन्धमा सबै कुरा भन्न सकिंदैन तापनि संक्षिप्तमा यस विषयमा केही लेखिन्छ ।

पृथ्वीनारायण शाहले विराज बखेतीलाई काजी बनाउने विचार गरेका थिए । विराज बखेती पृथ्वीनारायण शाहका निकै मन परेका थिए । काशीमा झगडा परेपछि रातारात गरी फर्केका पृथ्वीनारायण शाहलाई शत्रुपक्षबाट जोगाउन विराज बखेतीलाई पृथ्वीनारायणजस्तो बनाई घोडामा चढाई ल्याउने र पृथ्वीनारायणलाई भने सामान्य सैनिकजस्तो बनाई ल्याउने सल्लाह भएको बयान वंशावलीमा पाइन्छ ।[16] लमजुङका राजा रिपुमर्दन शाहसँग वि. सं. १७९६ मा चेपेघाटमा भएको सन्धिमा कालु पाँडेको महत्वपूर्ण भूमिका भएकोले पृथ्वीनारायण शाह कालु पाँडेसँग अत्यन्त प्रभावित भएर उनले आफ्नो मन परेका योग्य व्यक्ति विराज बखेतीलाई कजाइँ नदिई योग्यतम कालु पाँडेलाई सो पद दिए । यस कुरालाई आफ्नो उपदेशमा स्वयं पृथ्वीनारायणले यसरी प्रकट गरेका छन् –

**लम्‌जुंग्या राजा रिपुमर्दन् साहसित भेट गर्न भनि गया र चेपेघाटमा भेट भयो र घ्याहाम (घ) रेसका बात गर्दा जौना कुराले घाहा बाधुला भंने जड कुरो मेरा पेटमा थियो . सोहि जड कुरो कालु पाडेले गर्‍यो र घाहा बलियो बस्यो र मलाई आसर्जे लाग्यो र तर मलाई ता रिझायो, दुनिञा जस्‌देषी राजि रहन्छन्, उसैलाई काजाई दिनु भन्ने सास्त्रमा पनि कहेको छ . दुनिञामा बुझिहेरूं भनि बुझिहेर्दा दुनिञाबाट कालु पाडेको चाहा रहेछ र कालु पाडेलाई कजाई दिनुभया हामी दुनिञांबारमा छाहारि रहँदो हो भन्न्या सल्लाहा दिया र अब**

---

[12] ऐजन ७६-७८, ११४-११८, १३१-१३५, १४२-१४३, १४७-१५०, १५८-१६२, २४४-२४५, २५१-२६४ पृ. र गोरखाको इतिहास (दोस्रो भाग) का ६१२-६१३ पृ.

[13] श्री ५ पृथ्वीनारायण शाहको उपदेशको ३१८ पृ

[14] ऐजन

[15] ह्यामिल्टनको २४५ पृ

[16] श्री ५ पृथ्वीनारायण शाहको उपदेशको ६८८ पृ

**बाईसि चौबिसिले क्या भन्छन् भनि बुझ्नुहुवा बाईसि चौबिसिबाट पनि कालु पाडेकै चाहा रहेछ र कालु पाडेलाई कजाजि भया घाहाभराईस् बस्यौ राषन्चैछ भन्ने सल्लाहा दिया, मेरा मनमा ता बिराज बषेतिलाइ कजाई दिन आटेको थियो, तर न्याधा बुढी कालु पाडेकै ठह्र्यो र कालु पाडेलाई कजाजि भयाको हो .**[17]

यताबाट गोरखाराज्यमा योग्यताको कदर गरिन्थ्यो भन्ने स्पष्ट हुन्छ।

आफ्नो मन परेको मानिसलाई कजाइँ नदिई योग्यतम व्यक्तिलाई कजाइँ दिने पृथ्वीनारायणले सैनिकमा भर्ना गर्दा पनि योग्यतालाई स्थान दिनुपर्छ भनी बोलेका छन् –

**पजनि गर्दामा पनि सये नालका कम्पनी जमाउनु र सये नालका सुबेदार चारपाच लडाञीमा जस पाई आयाका यस्ता आफुले जाचि सुबेदार हाल्नु . सुबेदारले पनि सातपगरि दुई चार बाढ षायाका यस्ता सातपगरि हाल्नु . सातपगरिले स्वह हुवा आफुसित मर्नै मार्न्या जाची १६ हुवा हाल्नु . १६ हुवाले पनि आफुसित मर्नै मार्न्या जाची सिपाही हालि आफ्नाआफ्नापट्टि भर्ना गर्नु .**[18]

चार-पाँच लडाइँमा लडी योग्य ठहरिएकालाई सुवेदार बनाउनू, सुवेदारले सातपगरी छान्दा चार-पाँच लडाइँमा योग्यता देखाएकालाई सातपगरी बनाउनू, सातपगरीले लडाइँमा अघि सरेर लड्नेलाई हुद्दा बनाउनू, हुद्दाले पनि लडाइँमा अघि सरेर लड्नेलाई सिपाही बनाउनू भनी पृथ्वीनारायणले यहाँ बोलेका छन्।

उपदेशमा अन्यत्र पृथ्वीनारायणले यस्तो बोलेका छन् –

**लषनैबाट तिन् मुसल्मा मैरो चाकरिलाई नुवाकोटमा पिछा परिआयाका थिया . इनै बन्दुक्को तुलकलायेत तिनै मुसरमानले जान्याको रहेछ र सेषजरबर ममतकि भेषार्सि तिनै जनालाई अजिरनी दिया र तिलंगा सषायाको हो .**[19]

लखनौबाट आएका ३ जना मुसलमानलाई जागिर दिएर आफ्नो फौजको तालिम गरेको बयान पृथ्वीनारायण शाहले यहाँ गरेका छन्। एकातिर पृथ्वीनारायण शाह भारततिरबाट आउने नटुवा-गवैयालाई रोक्नुपर्छ, बरु नेपालखाल्डोकै नेवारहरूको नाच हेर्नुपर्छ भन्थे[20] भने अर्कोतिर आवश्यक पर्ने कुराचाहिँ जहाँबाट पनि ल्याउनुपर्छ भन्ने पक्षमा उनी थिए। सैन्यसङ्ग्रह गर्दै त्यसैको आधारमा नेपालएकीकरणको अभियानमा अघि बढेका पृथ्वीनारायण शाहले विशेषज्ञतालाई महत्त्व दिएका थिए भन्ने यताबाट स्पष्ट हुन्छ। पृथ्वीनारायणपछिका नेपाली शासकले पनि यस्तै नीतिको अनुसरण गरेको कुरा[21] यस प्रसङ्गमा स्मरणीय छ। जबसम्म यस नीतिको राम्रोसँग पालना हुँदै गयो, तबसम्म नेपालको उन्नति हुँदै गएको र जब यस नीतिको पालना हुन छाड्यो, नेपालको अवनति हुन थालेको कुराले पनि पृथ्वीनारायण शाहको यस नीतिको महत्त्व अझ स्पष्ट भएको छ।

---

[17] ऐजन ३१८-३१९ पृ
[18] ऐजन ३२६ पृ
[19] ऐजन ३३० पृ
[20] ऐजन ३३१ पृ
[21] पूर्णिमा ६२ अङ्का ३३-३४ पृ



पृथ्वीनारायण शाहभन्दा अधिको गोरखाराज्यको विषयमा सामग्रीको अभावमा धेरै कुरा भन्न सक्ने स्थितिमा हामी छैनौं। अहिलेसम्मको खोजीले द्रव्य शाहदेखि नरभूपाल शाहसम्मका राजाहरूको जन्ममृत्युको कुरा त छोडौं, राज्यवर्षको निर्णय पनि राम्रोसँग हुन सकेको छैन।[22] यसकारण त्यसबेलाका सबै कुरा प्रामाणिक रूपमा भन्न सक्ने अवस्थामा हामी छैनौं तापनि केही विचार गर्ने सामग्री भने नभएको होइन।

गोरखाराज्यका संस्थापक द्रव्य शाहका नाति राम शाह (वि. सं. १६७१-१६९३ आ.)[23] को राज्यकालमा गोरखाराज्यले जुन रूप लियो, त्यही रूप नै वि. सं. १८०१ आश्विन १५ गते श्री ५ पृथ्वीनारायण शाहले नुवाकोट विजय नगरेसम्म रहिरह्यो।[24] राम शाहले गोरखाराज्यलाई बढाएका मात्र होइनन् कि विभिन्न स्थिति बाँधी न्याय नपाए गोरखा जानू भन्ने आहान चलाउन पनि उनी समर्थ भए।[25] राम शाहले आफूले आर्जन गरेको सैनिक योग्यताद्वारा शत्रुलाई परास्त गरेको कुरा **गोरखाराजवंशावली**मा यसरी लेखिएको छ –

**श्री ५ महाराजाधिराज राम शाहबाट पनि मैले ईलम् सिक्याको काम लाग्न्या बषत् यहि हो . क्षत्रीयको धर्म पनि यही हो भन्न्या यस्तो बडो कठोर छाति गरि ढालतरबार बाहुलिमा लिनुभै पट्टाको हात चौमोहडा फेर्न लाग्नुभयो .**[26]

राम शाहले इलम सिकेको र त्यसको बलबाट युद्धमा लड्न उनी समर्थ भएको बयान यहाँ गरिएको छ। शिकार खेल्न जाँदा आफ्ना अङ्गरक्षक छुटेका राम शाहमाथि बारपाकीले हमला गर्दा राम शाहले तिनीहरूलाई परास्त गरेको बयान यहाँ गरिएको छ।[27]

**गोरखाराजवंशावली**मा भएको यही बयान **गोरखावंशावली**मा छ।[28] राम शाहले सैनिक तालिम लिएको बयान **गोरखावंशावली** र **गोरखाराजवंशावली**मा यसरी गरिएको छ –

**तेस्तै बषतमा देशदेषिन् कोहि १ रजपुत आयो . बाना बनेटी बाक पट्टा छुरि बिछुवा फरिगतका कटारको हात धना सकल इलममा कुशल भयाको रहेछ . तसलाई वर्ष दिन राषि श्री ५ महाराजा राम साहले सकल इलम सिकि तयार हुनुभयो .**[29]

माथिका कुराबाट गोरखाराज्यमा तालिम लिई योग्यता बढाउने र योग्यता बढाउने कुरामा मद्दत गर्नेको सम्मान गर्ने परम्परा थियो भन्ने बुझिन्छ। आफूले स्थापना गरेको,

---

[22] गोरखाको इतिहास (पहिलो भाग) का ५६-५७, ७०, ९९-१००, ११८-१२०, १२६-१२७, १३५-१३७, १९१-१९५ पृ
[23] ऐजन ८३, १०० पृ
[24] ऐजन १८ पृ
[25] गोरखाको इतिहास (दोस्रो भाग) को ३९३ पृ
[26] गोरखाको इतिहास (चौथो भाग) का ९८४-९८५ पृ
[27] ऐजन
[28] श्री ५ पृथ्वीनारायण शाहको उपदेशको ५७७ पृ
[29] ऐजन ५७३ पृ र गोरखाको इतिहास (चौथो भाग) को ९७८ पृ

गोरखा पोखरीथोकमा रहेको मुरलीधरनारायणमन्दिरको शिलालेखमा **मानवः सज्जनानां**[३०] (सज्जनहरूको मानमर्यादा गर्ने) लेखाई राम शाहले यही कुरालाई सङ्केत गरेका छन्।

यस्तै कामले गर्दा सानो गोरखाराज्य नेपालएकीकरणको नेतृत्व गर्न समर्थ भएको हो । गोरखाराज्यको यस्तै वैशिष्टयलाई झल्काउने वि. सं. १८६८ को वाग्वतीस्तम्भाभिलेखको पं. वाणीविलास पांडेको एउटा पद्य प्रस्तुत गर्दै यो सानो लेख यही टुङ्ग्याउने अनुमति चाहन्छु ।

**भक्तैतद्देश भूपाभ्युदयशतकरी कालिका जागरूका**
**योगी गोरक्षनाथोऽपि च जयति सदा विघ्नं विनिघ्नन् ।**
**शूराः सन्ति प्रजाः स्वप्रभुहितनिपुणा न्याययुक्ताः स्वतन्त्राः**
**सोऽयं गोर्खाभिधानो जगति विजयते कोऽपि रम्यः प्रदेशः ॥२॥**

(यस देश (गोरखा) का भक्त राजाका शयौ उदय गर्ने कालिकादेवी जहां जागा भएर रहन्छिन्, विघ्न नाश पार्ने योगी गोरखनाथ जहाँ सधैं रहन्छन्, जहाँका दुनियां शूरा, आफ्ना राजाको भलो गर्नामा कुशल, हक्की तथा स्वतन्त्र छन्, त्यस्तो गोरखा भन्ने कुनै राम्रो प्रदेश संसारमा श्रेष्ठ भएर रहेको छ ।)[३१]

**यो लेख तयार गर्दा उपयोग गरिएका पुस्तक र निबन्ध**

दिनेशराज पन्त - गोरखाको इतिहास (पहिलो भाग), दिनेशराज पन्त, काठमाडौं, वि. सं. २०४१

दिनेशराज पन्त - गोरखाको इतिहास (दोस्रो भाग), दिनेशराज पन्त, काठमाडौं, वि. सं. २०४३

दिनेशराज पन्त - गोरखाको इतिहास (तेस्रो भाग), दिनेशराज पन्त, काठमाडौं, वि. सं. २०४५

दिनेशराज पन्त - गोरखाको इतिहास (चौथो भाग), दिनेशराज पन्त, काठमाडौं, वि. सं. २०५०

दिनेशराज पन्त - गोरखाको ऐतिहासिक महत्व, आजको समाचारपत्र, २ वर्ष १९७ अङ्को ५ पृ. कामना प्रिन्टिङ्ग एण्ड पब्लिकेशन प्रा. लि. काठमाडौं, वि. सं. २०५४ श्रावण ११ गते

नयराज पन्त, देवीप्रसाद भण्डारी,
गौतमवज्र बज्राचार्य, दिनेशराज पन्त - श्री ५ पृथ्वीनारायण शाहको उपदेश (१-५ खण्ड), जगदम्बा प्रकाशन ललितपुर, वि. सं. २०२५, २०२८

नयराज पन्त, देवीप्रसाद भण्डारी,
गौतमवज्र बज्राचार्य, दिनेशराज पन्त - श्री ५ पृथ्वीनारायण शाहको उपदेशको मूल भागको ऐतिहासिक व्याख्या, पूर्णिमा ६२ अङ्का ११-४६ पृ. संशोधनमण्डल काठमाडौं, वि. सं. २०४१

फ्रान्सिस बुच्नान ह्यामिल्टन - यान् अकउन्ट अफ् द किङ्डम् अफ् नेपाल् यान्ड् अफ् द टेर्इटरइज् अनेक्स्ड् टु दिस् डोमिन्यन् बाइ द हाउस् अफ् गोर्खा (नेपाल अधिराज्यको र गोर्खाली राजवंशले यस राज्यमा गाभेका प्रदेशहरूको बयान), अर्किबोल्ड कन्स्टेब्ल यान्ड कम्पनी एडिनबर्ग, वि. सं. १८७६

---

[३०] गोरखाको इतिहास (तेस्रो भाग) को ६५३ पृ.

[३१] गोरखाको इतिहास (पहिलो भाग) को १ पृ.



# वर्तमान सन्दर्भमा राजसंस्थाको औचित्य

– रमेश शर्मा

नेपाल राष्ट्रनिर्माणमा राजसंस्थाको अतुलनीय योगदान रहेको कुरा सर्वविदितै छ । गोरखाका राजा बडामहाराजाधिराज श्री ५ पृथ्वीनारायण शाहको अदम्य साहस, राजोचित शौर्य तथा विलक्षण बुद्धिमत्ताको कारण आज हामीले आफूलाई नेपाली भन्न पाएका हौं । औपनिवेशिक आकांक्षामा चुर्लुम्म डुबेर पाशविक शक्तिको माध्यमबाट विश्वका अधिकांश राष्ट्रलाई निर्ममतापूर्वक गाँज्न हिंडेका खास गरी तत्कालीन पश्चिमी शक्तिहरूको गिद्धेदृष्टिबाट त्यतिखेर यो राष्ट्रको स्वतन्त्रता जोगाइराख्नु त्यति सहज कार्य थिएन । तर आफ्नो अस्तित्व र राष्ट्राभिमानका लागि आवश्यक परेका बखत प्राणसमेत आहुति दिन सदा तत्पर रहने तत्कालीन भारदारवर्ग तथा राष्ट्र र जनताको हितलाई नै सर्वोपरि अभीष्ट ठान्ने राजा पृथ्वीनारायण शाहजस्ता महान् नेताहरूको राजनीतिक कौशल र कूटनीतिक चातुर्यकै कारणले गर्दा आज हामीले स्वतन्त्र सार्वभौमसत्तासम्पन्न राष्ट्रिय अस्तित्व पाएका हौं । यसका लागि हामी नेपाली ती वीर सपूतहरूप्रति सदा ऋणी रहनेछौं ।

विगतको इतिहासलाई गहिरिएर नियाल्ने हो भने यो राष्ट्रको अस्तित्वबारे जनतामा जागृतिबोध सिर्जना गर्ने कार्यमा हिन्दूराजदर्शनमा आधारित उदात्त दृष्टिकोण एवं मानवोचित भावनाहरूद्वारा अभिषिक्त राजमुकुटले अद्वितीय भूमिका निर्वाह गरेको कुरा स्पष्ट हुन्छ । 'अघि लोकहरूको व्यवस्थापनको लागि दृढसङ्कल्प ब्रह्माको इच्छाअनुसार र आज्ञानुसार आदिम राजा स्वायम्भूव मनुले चलाएको, स्मृति (मनुस्मृति) बनाएर घोषित गरिएको, विधिपूर्वक वैवस्वत मनुले अनुसरण गरिएको र प्रह्लादको अधिनायकत्वमा हालसम्म (हिन्दूसङ्कल्पअनुसार) चलि नै रहेको राजतन्त्र' यो राष्ट्र र यहाँका जनाताका लागि युग-युगदेखि प्रवुद्व एवं स्निग्घ मार्गदर्शकको रूपमा रहँदै आएको छ । बडामहाराजाधिराज पृथ्वीनारायण शाहद्वारा गरिएको बाईसे र चौबीसे राज्यहरूको एकीकरण तथा राजा महेन्द्रद्वारा मेचीदेखि महाकालीसम्म, तराईदेखि पहाडसम्म जगाइएको राष्ट्राभिमान एवं राष्ट्रिय गर्व र गौरवप्रतिको चेतनाबोध यथार्थमा हिन्दूआदर्शमा आधारित राजमुकुटको त्यही महान् परम्पराका जीवन्त द्योतक हुन् ।

स्नेहं दयां च सौख्यं च यदि वा जानकीमपि
आराधनाय लोकस्य मुञ्चतो नास्ति मे व्यथा ॥ (वाल्मीकिरामायणम्)

'अर्थात् – राजा रामले भन्नुभएको छ – प्रजाको हितको संरक्षणको लागि म प्राणप्रिया सीतालाई पनि छोड्न सक्छु, कुनै चिन्ता छैन । अरु व्यक्तिगत स्नेह, दया, सुख, आरामको त कुरै छोडूँ ।' हिन्दूराजदर्शनमा यस किसिमको त्यागपूर्ण, निःस्पृह एवं जनता र राष्ट्रप्रति सर्वतोभावेन समर्पित राजमुकुटको परिकल्पना गरिएको छ । यो कुनै कोरा कल्पना होइन । यो केवल कहिल्यै पूरा हुनै नसक्ने आदर्शयुक्त बौद्धिक विलासको उपज पनि होइन । किनभने हरिश्चन्द्र, जनक तथा दशरथजस्ता राजाहरू सोही आदर्शपालनका कारण आज पनि उत्तिकै आदरणीय छन्, पूज्य छन् । त्यति किन, हाम्रै देशको आधुनिक

इतिहास साक्षी छ, बडामहाराजाधिराज पृथ्वीनारायण शाह, राष्ट्रपिता त्रिभुवन तथा राजा महेन्द्रले समेत त्यही महान् परम्परालाई आदर्श र राष्ट्रका लागि समर्पित गरेको कुरो कसैबाट छिपेको छैन । आत्मवादमा आधारित हिन्दूराजदर्शनका उदात्त भावनाबाट सदा निर्देशित राजमुकुट जाति, धर्म, वर्ण, भाषा तथा क्षेत्रका आधारमा विभाजित हाम्रोजस्तो मुलुकका लागि सदैव सर्वस्वीकृत मार्गनिर्देशक छत्रच्छायाको रूपमा रहन सक्तछ । यसमा कुनै सन्देह छैन ।

विगतको पञ्चायत व्यवस्थाले हिन्दूराजदर्शनमा आधारित यही आदर्शलाई धेरै हदसम्म आत्मसात् गरेको थियो र राजा महेन्द्रको शासनावधि रहेसम्म यो आदर्श कुनै न कुनै रूपमा जनताको हित र समुन्नति एवं राष्ट्रको स्वाभिमान, गर्व र गौरवमा रूपान्तरित समेत भएको कुरो जोकोहीले महसुस गर्न सक्तथ्यो । तर राजा महेन्द्रको देहान्तपश्चात् राज्यसञ्चालनप्रक्रियामा यस किसिमको सिद्धान्त र आदर्शमा क्रमशः ह्रासयुक्त विचलन आएको सर्वत्र अनुभव हुनथाल्यो । हिन्दूराजदर्शनमा अन्तर्निहित उच्च प्रजातान्त्रिक आदर्श र मर्मलाई समयसापेक्ष सुधार र संशोधनसहित आत्मसात् गर्नसक्ने क्षमता नेतृत्वमा देखिएन, जसको फलस्वरूप आम जनताको दृष्टिमा तत्कालीन व्यवस्थाको साखमात्र गिरेको होइन, राजसंस्थाको गरिमा र महत्ता नै पनि अभूतपूर्वरूपमा खण्डित हुनपुग्यो । २०४६ सालमा जनआन्दोलनद्वारा स्थापित संवैधानिक राजतन्त्र र संसदीय प्रजातान्त्रिक प्रणाली त्यही ह्रासोन्मुख प्रवृत्तिकै अन्तिम परिणति एवं पराकाष्ठा थियो भन्नमा सङ्कोच मान्नुपर्ने खास कुनै आधार देखिन्न ।

हिन्दूराजदर्शनले जनताको आकाङ्क्षा र चाहनालाई सर्वोपरि स्थान दिने गरेको कुरा सर्वविदित नै छ । सोहीअनुरूप यतिखेर लोकसम्मतिमा आधारित यो राजनीतिक प्रणालीलाई कसरी सुदृढ, संस्थागत तथा राष्ट्र र जनताको हितसापेक्ष तुल्याउने हो त्यसबारे गम्भीर भएर सोच्नु 'संवैधानिक राजसंस्था' को पनि दायित्व हो । प्रजातन्त्र पुनर्स्थापित भएदेखि यता विगत आठ-नौ वर्षको हाम्रो अनुभव त्यति सुखद रहन सकेको छैन । जुन कारणहरूले गर्दा २०१७ सालमा तत्कालीन संसदीय व्यवस्थाको अन्त गर्नुपर्ने भएको थियो, तिनै कुराहरू आज हिजोभन्दा पनि प्रखररूपमा राष्ट्रिय राजनीतिमा भोग्नुपरिरहेको छ । तथाकथित प्रजातन्त्रवादीहरूको हातमा आज जनता लुटिएका छन्, राष्ट्रमाथि अभूतपूर्व घात भएको छ । तिनको निर्लज्ज एवं नाङ्गो अतिक्रमणको कारण स्वयं प्रजातन्त्रको अस्मितामाथि बलात्कार भएको छ । हाम्रो राष्ट्रिय गर्व र गौरवको मुलुकभित्रमात्र होइन अन्तर्राष्ट्रिय जगत्मै समेत अपमानपूर्ण परिहास हुन थालेको छ । राष्ट्रिय अर्थतन्त्र दिनपरदिन खोक्रो हुँदै गएको छ भने जनता झन्-झन् गरीब । कुनै वाह्य शक्तिविशेषलाई रिझाई आफ्नो क्षुद्र राजनीतिक आकाङ्क्षा पूर्ति गर्ने नेतृत्ववर्गको घृणित लालसाबाट अभिप्रेरित तथाकथित विश्वव्यापीकरण र उदारीकरणको बलिवेदीमा अधिकांश राष्ट्रिय उद्योगधन्दालाई चढाइसकिएको छ । आज राष्ट्र सम्पूर्णरूपमा परनिर्भर बन्न पुगेको छ । पञ्चायतको तीस वर्षमा राष्ट्रको वैदेशिक ऋण जम्मा ३६ अर्ब रुपैयाँ भएकोमा विगत आठ-नौ वर्षमा सो ऋण बढेर झण्डै एक खर्ब ७० अर्ब पुगे तापनि राष्ट्रमा दीर्घकालीन हितसम्वर्धन गर्ने खालका खासै कुनै पूर्वाधारहरू खडा भएका देखिन्नन् । सबभन्दा खेदको कुरो त अझ के भने नेपालको इतिहासमै सम्भवतः



पहिलोपटक हुम्लामा एक छाक खाना र सामान्य औषधिमुलोसमेत नपाएर झण्डै चारसय हुम्लीले आफ्नो अमूल्य जीवन गुमाउनुपऱ्यो । यसका अतिरिक्त एकातिर नौलो जनवाद प्रतिष्ठापित गर्ने नाममा विगत दुई बर्षभन्दा बढी समयदेखि शुरु भएको 'जनयुद्ध' अन्त गर्न कैयौंको ज्यान गइसकेको छ भने अर्कोतिर बढ्दो माओवादी क्रियाकलापलाई दमन गर्ने नाममा सञ्चालित राज्यआतङ्कको कारण सयौं निर्दोष जनताले अनाहकमा आफ्नो अमूल्य जीवन गुमाउनुपरिरहेको छ । सर्वत्र अराजकता छ, आतङ्क छ । तर दुर्भाग्यको कुरो, यस्तो गम्भीर स्थितिप्रति न त सरकार वा पार्टी नेतृत्व सम्वेदनशील भएको देखिन्छ न त श्रद्धेय राजसंस्था नै ।

विक्रशन्त्यो यस्य राष्ट्रात् ह्रियन्ते दस्युभिः प्रजाः
संपश्यतः सभृतस्य मृतः स न तु जीवति ॥ (महाभारत)

'अर्थात् – कर्मचारीहरूले समेत राजाले देख्दादेख्दै राज्यका डाका, फटाहा, दुष्ट तत्त्वहरूले सताएर दुनियाँले आर्तचीत्कार गर्नुपऱ्यो भने त्यो अशक्त राजाले बाँचेको कुनै सार छैन ।' यदि हिन्दूराजदर्शनमा आधारित राजमुकुट वा राजपरम्परालाई गरिमायुक्त तुल्याई जनता र राष्ट्रकै वृहत्तर हितमा सदाका लागि अक्षुण्ण तुल्याइराख्ने हो भने उपर्युक्त भनाइलाई महाभारतकालीन समयमा मात्र होइन आजको युगमा पनि उत्तिकै सान्दर्भिक एवं औचित्यपूर्ण भएको ठान्नुपर्दछ । केवल शोभाका रूपमा मात्र रहने राजमुकुट वा राजसंस्था हिन्दूराजदर्शनअनुरूप किमार्थ हुन सक्तैन । हाम्रो हिन्दूराजपरम्परामा निष्क्रिय राजाको परिकल्पना भएकै छैन । न राजा राम निष्क्रिय थिए न त राजा हरिश्चन्द्र वा जनक नै । वर्तमान विश्वको प्रचलित मान्यताअन्तर्गत स्थापित 'संवैधानिक राजतन्त्र' अन्तर्गत पनि राजाले सम्पूर्ण राष्ट्र र जनतासमेत खाक भएको अवस्थामा पनि तथाकथित संवैधानिक मर्यादाको पालनाखातिर मूर्तिवत् निष्क्रिय भइदिनुपर्छ भन्ने मान्यता शायद कहीं पनि हुँदैन । हाम्रो वर्तमान संविधानमै पनि स्पष्ट रूपमा लेखिएको छ – 'श्री ५ बाट नेपाली जनताको सर्वोत्तम हित र समुन्नतिको लागि यो संविधानको पालन र संरक्षण गरिबक्सनेछ' (नेपाल अधिराज्यको संविधान ०४७, धारा २७ उपधारा ३) ।

यहाँ राजाको सक्रियताको बकालत गर्न खोजिएको यस कारणले होइन कि राजाले स्थापित संसदीय प्रजातन्त्रको अन्त्य गरी निरंकुश स्वेच्छाचारितामा आधारित तानाशाही व्यवस्था पुनः प्रतिष्ठापित गरिदियून् । राजा सक्रिय हुनुको अर्थ तानाशाह वा निरंकुश स्वेच्छाचारी शासकका रूपमा देखिनुमात्र होइन । वास्तवमा त्यसो भन्नु 'सक्रिय राजतन्त्र' को परिभाषा नबुझ्नु वा बुझेर पनि नबुझेजस्तो गर्नु हो । यथार्थमा हाम्रो वर्तमान सन्दर्भमा राजा सम्पूर्णरूपमा निष्क्रिय भएर बस्न हुन्न भन्नुको तात्पर्य के हो भने वर्तमान संविधानको मूल मर्ममाथि कुठाराघात हुन नदिनका लागि पनि राजा जनता, राष्ट्र तथा प्रजातान्त्रिक सिद्धान्त र आदर्शको हितखातिर मूर्तिवत् सम्वेदनशीलताविहीन भएर बस्न हुँदैन । एउटा कुरो हामीले स्पष्टरूपमा के पनि बुझ्नुपर्छ भने अहिलेका राजनीतिक पार्टीहरूले नितान्त स्वार्थान्धतावश वकालत गर्ने गरेको मूर्तिवत् निष्क्रिय राजाको परिकल्पना र माथि उल्लिखित संवैधानिक प्रावधान परस्पर विरोधाभाषपूर्ण देखिन्छन । बढ्दो हिंसाहत्या तथा त्यसको प्रतिकारको वहानामा मच्चाइएको राज्य-आतङ्क, क्षुद्र स्वार्थ तथा घृणित सत्तालिप्साको कारण राष्ट्रिय राजनीतिमा देखिएको अस्थिरता, व्याप्त

भ्रष्टाचारले गर्दा जर्जर हुन पुगेको राष्ट्रिय अर्थतन्त्र तथा राजनीतिक शक्तिहरूको सत्तालिप्सामा आधारित अदूरदर्शितापूर्ण नीति तथा कार्यक्रमको कारण ह्रास हुँदै गएको हाम्रो राष्ट्रिय अस्मिताको पृष्ठभूमिमा पनि संविधानको दुहाई दिएर राजाले सम्पूर्णरूपमा निष्क्रिय भइदिने हो भने जनता र राष्ट्रको उद्धार कसरी हुन सक्तछ ? यस्तो भयानक कहालीलाग्दो तथा सङ्कटपूर्ण अवस्थामा पनि स्थापित संसदीय मर्यादाको सीमाभित्रै रहेर राजा सक्रिय हुन हुँदैन, नितान्त निष्क्रिय नै रहनुपर्छ भन्ने तत्त्वहरू यथार्थमा हिन्दूराजदर्शनमा आधारित जनता र राष्ट्रको हितसापेक्ष राजतन्त्रात्मक शासनव्यवस्थाका दुश्मन तथा निरोवादी राजतन्त्रात्मक पद्धतिका पृष्ठपोषक हुन् ।

यदि निरोवादी राजतन्त्रात्मक शासनव्यवस्थालाई नै कायम राख्ने हो भने यस किसिमको राजतन्त्रमाथि जनताले आस्था र विश्वास राखिरहनुपर्ने कुनै औचित्य रहँदैन । पचास वर्षदेखि गणतन्त्रात्मक शासनशैली अपनाउँदै आएको छिमेकी राष्ट्र भारतमा सामान्यतः 'सेरिमोनियल हेड' मात्र मानिने त्यहाँका राष्ट्रपतिले पनि संसदीय प्रजातान्त्रिक मर्यादाअनुकूल नहुने ठहऱ्याई बिहारको स्थापित सरकार भङ्ग गर्ने केन्द्र सरकारको हालैको आग्रहलाई ठुकऱ्याइदिएर जनता, राष्ट्र तथा प्रजातान्त्रिक सिद्धान्त र आदर्शको हितमा एउटा नयाँ उदाहरण प्रस्तुत गरे । प्रधानमन्त्री नै सर्वेसर्वा रहने गणतन्त्रात्मक शासनप्रणाली भएको मुलुकमा त सरकारको नीति तथा निर्णयमा विचलन आई त्यो राष्ट्रको वृहत्तर हितमा नहुने देखेपछि राष्ट्रपतिले त्यस्तो महत्वपूर्ण निर्णय लिन हुँदोरहेछ भने राजालाई ईश्वरवत् ठान्ने हाम्रोजस्तो राजतन्त्रात्मक मुलुकमा चाहिं राजाले जनता र राष्ट्रको हितमा बोल्न किन नहुने ?

यिनै पृष्ठभूमिमा यस लेखका लेखकले झण्डै एक वर्षअघि एक साप्ताहिकमा प्रकाशित लेखमा नेपालमा पहिलोपटक प्रत्यक्ष निर्वाचनको माध्यमबाट पो राजा चुन्ने व्यवस्था कायम गर्नुपर्ने हो कि भन्ने आशययुक्त विचार व्यक्त गरेको थियो । संयोगले यतिखेर बेलायतमा पनि त्यहाँका प्रधानमन्त्री टोनी ब्लेयरका प्रमुख सल्लाहकारहरूमध्येका एक जियोफ मुल्गानले सोही आशययुक्त प्रस्ताव प्रधानमन्त्रीसमक्ष राखेको कुरो प्रकाशमा आएको छ । चाहे बेलायतमा होस् या नेपालमा, वास्तवमा जुन उद्देश्य र आकाङ्क्षाले राजतन्त्रात्मक शासन व्यवस्थालाई अक्षुण्णता दिने प्रयास गरिंदै आएको हो, त्यो परिपूर्ति हुनु त परै जाओस्, राजमुकुटलाई प्रतिनिधित्व गर्नेहरूले त्यो श्रद्धेय संस्थाको गरिमा, ओज र महत्तालाई समेत कायम राख्न नसकेको अवस्थामा सोही संस्थाको दीर्घकालीन हितलाई हृदयङ्गम गरेर निर्वाचनको विषयमा सोच्न बाध्य हुनुपरेको हो । किनकि जनताको श्रद्धा, आस्था र विश्वास राजसंस्था वा राजमुकुटप्रति हो, कुनै व्यक्तिविशेषप्रति होइन र त्यो हुनु पनि हुँदैन । अन्त्यमा –

राजतन्त्रं सदा जीव्यात् मान्ति मे न तनौ मुदः
विश्वमानवभूत्यर्थे गाढं यदभिनन्दतः ॥ (राजतन्त्रं सदा जीव्यात्)

'अर्थात् – विश्वका मानवमात्रको कल्याणको निमित्त तीव्रताको साथ जसलाई अभिनन्दन गर्दा मेरो शरीरमा हर्ष अटाउँदैनन्, त्यो राजतन्त्र सदा जीवित रहोस् ।' जयतु संस्कृतम् !

(साभार : समाज दर्पण, २०५५ पुस)



# अमर राष्ट्रनिर्माता बडामहाराजाधिराज श्री ५ पृथ्वीनारायण शाह

– रामचन्द्र न्यौपाने

अठारौं शताब्दीको हाम्रो भूभागले अपेक्षा गरेको ऐतिहासिक आवश्यकतालाई पूरा गर्न प्रातःस्मरणीय हाम्रा चरित्रनायक श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको जन्म गोरखामा भएको हो । राष्ट्रिय एकीकरणका लागि मौसूफबाट सम्पन्न भएका भगीरथ प्रयत्नहरूको जति प्रशंसा गरे पनि कमै हुन्छ ।

श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको जीवनवृत्तबाट थाहा हुन्छ – मौसूफ सरकार अग्रगण्य वीरमात्र होइन कि अत्यन्त मेधावी, कुशल राजनीतिज्ञ पनि होइबक्सिन्थ्यो । हाम्रा चरित्रनायक बडामहाराजाधिराजबाट स-साना कैयन् दर्जन टुक्रामा विभाजित भइरहेको हाम्रो देशको भूखण्डलाई एकै सूत्रमा आबद्ध नगरिबक्सेको भए सार्वभौमसत्तासम्पन्न अर्वाचीन नेपालको नागरिक हुने सौभाग्य हामीलाई निश्चय पनि प्राप्त हुने थिएन । आफ्नै आकाश, आफ्नै धुरी र आफ्नै क्षितिज भएको स्वतन्त्र राष्ट्रको नेपाललाई विश्वमा प्रतिष्ठापित गराउन आफ्ना उत्तराधिकारीहरूलाई मौसूफ श्री ५ बडामहाराजाधिराजबाट प्राप्त भएको प्रेरणा अत्यन्त प्रशस्तिपूर्ण सिद्ध भएको छ ।

राष्ट्रनिर्माणको अभूतपूर्व भूमिकाको प्रारम्भ र त्यसको सफल परिणतिबाट आधुनिक नेपालको इतिहासले मौसूफ श्री ५ बडामहाराजाधिराजलाई केन्द्रीय व्यक्तित्वका रूपमा प्रतिस्थापित गरेको छ । यो यथार्थतालाई सबैजसो हाम्रा इतिहासकारहरूले स्वीकार गरेका छन् । एकीकरणको सैनिक अभियानद्वारा बागमती र हिमाली अञ्चलका स-साना राज्यको समष्टीकरण गरेर मौसूफ बडामहाराजाधिराजबाट नेपाललाई एउटा नयाँ बलवान् राष्ट्रको रूपमा सङ्गठित गरिबक्सेको नभए यस खण्डको निजी अस्तित्वको अवश्य पनि संभव हुने थिएन । जस्तो कि स्वर्गीय कविवर केदारमान व्यथित भन्नुहुन्छ – श्री ५ बडामहाराजाधिराजबाट सम्पन्न भएका कार्यहरूको इमान्दारीपूर्वक विश्लेषण गऱ्यौं भने मौसूफ सरकारमा तीन असाधारण गुण पाउँछौं – ग्रहणशील मनस्तत्त्व, वस्तुस्थितिको स्वीकृति र परम्परामा अन्तर्दृष्टि ।

युगप्रवर्तनका लागि नभई नहुने माथिका यी गुणहरू श्री ५ बडामहाराजाधिराजमा जन्मना विद्यमान थिए भनेमा अत्युक्ति हुने छैन । यिनै गुणहरूले गर्दा नेपाल राष्ट्र र नेपाली राष्ट्रियतालाई प्रतिष्ठा प्रदान गर्न मौसूफ बडामहाराजाधिराज पूर्णरूपमा सफल होइबक्सेको हो ।

प्रातःस्मरणीय चरित्रनायक श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहबाट राष्ट्रलाई फूलबारीको रूपमा, जनजीवनलाई फूलका रूपमा र राजालाई पोषक मालीको रूपमा अभिव्यक्ति बक्सेर राजा र प्रजाको सम्बन्धमा राजनीतिक विचारधाराको क्रान्ति ल्याइबक्सेको छ । यसैले श्री ५ बडामहाराजाधिराजको क्रान्तिकारी व्यक्तित्व आजसम्म

पनि हामी नेपालीहरूका लागि मूल स्रोत बन्न सकेको हो । वैज्ञानिक युगमा प्रवेश गरिसकेकको विश्वसँग तालमेल मिलाई जीवनका सबैजसो पक्षलाई लयपूर्ण बनाउन हाम्रा लागि मौसूफ बडामहाराजा-धिराजबाट तयार गरिबक्सेको राष्ट्रियताको छन्द कम सङ्गीतपूर्ण छैन । मौसूफ सरकारबाट प्रणयन भएको राष्ट्रियताको छन्दमा समग्रताको जुन जीवनदर्शन मुखरित भएको छ, त्यसले हाम्रो एकतालाई अत्यन्त सङ्गीतपूर्ण प्रवाह प्रदान गरेको छ । हाम्रो राष्ट्रिय जीवनका सम्पूर्ण पक्षलाई बडामहाराजाधिराजको व्यक्तित्वले समेटेको छ ।

नेपालको राजसंस्था राजनीतिक स्थिरता कायम राख्न र नेपाललाई आधुनिकीकरण-तर्फ डोऱ्याउन मूल प्रेरक रहँदै आएको छ । जबसम्म राजनीतिक स्थिरता कायम हुन्न तबसम्म राज्यले आफ्नो चातुर्दिक विकास गर्न सक्दैन । यो एउटा सावभौमिक तथा सर्वमान्य तथ्य हो । राजनीतिक स्थीरताका लागि राष्ट्रियताको विकास हुनु र जनजीवनमा नैतिकता, संस्कृति, ऐतिहासिक परम्परा, भाषा र जातिको आधारमा हामी एक हौं भन्ने चेतना जागृत हुनु परमावश्यक छ ।

राष्ट्रिय अनुभूति तथा राजनीतिक स्थीरताका लागि नस्ल अथवा जाति एक महत्वपूर्ण तत्त्व भए पनि मानवजातिको विकासको वर्तमान अवस्थामा उसको महत्व कम हुँदै गएको छ । मनुष्यलाई एक-दोस्रोको नजीक ल्याउन र राजनीतिक स्थीरता कायम गर्न धर्मले पनि ठूलो भूमिका खेलेको हुन्छ । राष्ट्रियताको बिकास र राजनीतिक स्थीरताका लागि भाषा पनि एक महत्वपूर्ण कारक मानिएको छ । भाषा नै एउटा यस्तो साधन हो जसको माध्यमबाट मनुष्य एक-अर्काको नजीक आउन सक्तछ र आपसमा घनिष्टता स्थापित गर्न सक्तछ । नेपाल अधिराज्यको भूराजनीतिक स्थिति, धार्मिक भावना, सास्कृतिक परम्परा, सामाजिक ढाँचा, ऐतिहासिक पृष्ठभूमि तथा लोकप्रियताका आधारमा देशको एकताको प्रतीक श्री ५ (राजसंस्था) नै हो । श्री ५ बडामहाराजा-धिराजबाट भएको नेपाल राष्ट्रको एकीकरणपश्चात् नै यसको आधुनिकीकरणतर्फ अग्रसर गराउन र सर्वतोमुखी विकास गर्न समय र परिस्थितिअनुसार श्री ५ बाट नै गतिशील ऐतिहासिक कदमहरू चालिएका छन् । नेपालको एकीकरण राजनीतिक ध्रुवीकरण, प्रजातान्त्रिकीकरण तथा आधुनिकीकरण यसका प्रोज्ज्वल उदाहरण हुन् ।

नेपाल राष्ट्रका संस्थापक तथा एकीकरणकर्ता श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको राजनीतिक व्यक्तित्व नेपालको इतिहासमा अतुलनीय छ, ओजपूर्ण र गरिमामय छ । आजको पवित्र दिनमा प्रत्येक नेपाली श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको सम्झना श्रद्धा, भक्ति र स्नेहपूर्वक गरिरहेका छन् । अमर राष्ट्रनिर्माता श्री ५ पृथ्वीको दिव्य व्यक्तित्वको कीर्तिकिरणले प्रत्येक नेपालीमा असीम धैर्य, साहस र आत्मविश्वास जगाएको छ । नेपाल र नेपालीमात्रको उद्धार र उपकार गर्ने यशस्वी महापुरुष पृथ्वीमा नेपालका जड-चेतन प्रत्येक तत्त्व नै कृतज्ञता चढाउँछन् ।





# पृथ्वीनारायण शाह र नेपाल एकीकरणबारे छोटो टिप्पणी

– सीताराम अधिकारी



### गोरखाली राजा नरभूपाल शाह र राजपरिवार

आधुनिक नेपालका पिता गोरखाली राजा पृथ्वीनारायण शाह थिए । पिताको अर्थ स्रष्टा हो, पालनहार हो, संरक्षक हो । उनले गोरखालाई हुर्काए, बढाए अर्थात् यसको विस्तार गरे । विस्तारको पाइला रोकेनन् ।

उनका जिजुबाजे द्रव्य शाहले लिगलिगबाट थालनी गरेको एकीकरणको यात्रालाई उनले तीव्र गति दिए । बाबा गोरखनाथको आशीर्वाद पाएका पृथ्वीनारायण शाह युद्धमा पटक-पटक विफल भए, तापनि कहिल्यै हार खाएनन्, कहिल्यै निराश भएनन्, कहिल्यै आफ्नो लक्ष्यबाट विचलित भएनन् । यथार्थमा उनको सम्पूर्ण इतिहास र अहिलेको नेपालको उतिबेलाको परिकल्पना हेर्दा उनलाई साँच्चिकै दैवीशक्ति मिलेको थियो भन्ने हामीलाई लाग्दछ ।

विक्रमाब्द १७७९ मा माता कौशल्यावतीदेवीको कोखबाट ७ महिनामा पैदा भएका पृथ्वीनारायण शाहका पिता गोरखाका राजा नरभूपाल थिए । नरभूपाल शाहका ४ रानी थिए । जेठी रानी चन्द्रप्रभावतीदेवी खाँचीकी राजकन्या थिइन् । माहिंली कौशल्यावतीदेवी पाल्पाली राजा गन्धर्वसेनकी छोरी, साहिंली बुद्धिमतीदेवी पर्वतका राजाकी छोरी र कान्छी रानी सुभद्रावती तनहुँकी राजकुमारी थिइन् । रानी सुभद्रावती निःसन्तान नै भइन् भने माहिंली रानी कौशल्यावतीका गर्भबाट दलमर्दन शाह र पृथ्वीपति शाह नामक अरु दुई छोरा र पद्मकुमारी तथा विशालवदना दुई छोरी पनि जन्मिए । बुद्धिमतीदेवी रानीबाट सूरप्रताप शाह र चार छोरी जन्मिए । यिनैबाट जन्मिएका वृन्दकेसर शाह गर्भका हिसाबले पृथ्वीनारायण शाहभन्दा जेठा थिए तर जन्मका हिसाबले भने पृथ्वीनारायण शाह सातै महिनामा जन्मिएर जेठा भइदिए ।

दरबारमा को राजा हुने भन्ने विवाद हुँदाहुँदै नियतिले वृन्दकेसरलाई चुँडाई लग्यो । कान्छी रानी सुभद्रावतीदेवीको कोखबाट महोद्दाम शाह र दलजीत शाह पैदा भएका थिए । सन्तानको दृष्टिकोणले गोरखाका राजा नरभूपाल शाह उर्वर थिए ।

### बाल्यकाल

पृथ्वीनारायण शाहको बाल्यकाल रोचक थियो । बालकहरू प्रायः रोचक हुन्छन्, चञ्चल हुन्छन् । उनीहरूमा नयाँ-नयाँ कुराको जिज्ञासा हुन्छ र एकपछि अर्को कुरा सिक्ने र अनुभव गर्ने रहर बढिरहेको हुन्छ । पृथ्वीनारायण शाह राजकुमार थिए । दरबारिया पालन-पोषणमा हुर्केका राजकुमारको बाल्यकाल साधारण तर उल्लेखनीय थियो ।

जनश्रुतिअनुसार राजकुमार पृथ्वीनारायण शाहले गोरखाका संरक्षक इष्टगुरु गोरखनाथबाट आशीर्वाद पाएका थिए। पृथ्वीनारायण शाहलाई उनको पाइलो परेको भूमि उनकै राज्य बन्न सक्ने वरदान मिलेको थियो भन्ने जनश्रुति अझ पनि छ।

**पृथ्वीनारायण शाहको बिबाह**

सन् १७३७ मा पृथ्वीनारायण शाहका पिता राजा नरभूपाल शाहले नुवाकोटमा आफ्नो आधिपत्य जमाउने उद्देश्य राखी हमला गरेका थिए तर उनी विजयी हुन सकेनन्। उनको काठमाडौं उपत्यकालाई गोरखा राज्यको विस्तारित राज्य बनाउने उद्देश्य झन् तीव्र हुँदै गयो। त्यसैले पृथ्वीनारायण शाहको पहिलो बिहे मकवानपुरका राजा हेमकर्ण सेनकी सुपुत्री इन्द्रावतीदेवीसित गरियो। यो सम्बन्ध काठमाडौं उपत्यका आक्रमण गरी गोरखा राज्यको विस्तार गर्न सहयोग पुग्ने हेतुले गरिएको थियो, तर राजकुमारी इन्द्रावतीदेवीलाई हेमकर्णसेनले आफ्नो संस्कारअनुसार गोरखा पठाएनन्, फलस्वरूप दुई राज्यको बीचमा चिसोपन बढ्यो र पछि पृथ्वीनारायण शाहको विवाह बनारसका वैंस राजपूत अहिमान सिंहकी छोरी नरेन्द्रलक्ष्मीसित भयो। उनका अरु भाइहरूको विवाह पनि यिनै राजकन्याहरूसित भयो र यसको ज्यादै महत्व पनि रह्यो।

**पृथ्वीनारायण शाहको भादगाउँको बसाइ**

पृथ्वीनारायण शाहमा भावी गोरखाको विस्तारको चेतना जागिसकेको थियो। तसर्थ काठमाडौं उपत्यकाको सपनालाई लिएर उनी युवराज हुँदैमा भादगाउँमा लगभग तीन वर्ष बसी उपत्यकाका तीनै राज्यको बीचमा उठेको आपसी वैमनष्यको राम्रो अध्ययन गरेर गोरखा फर्किए। भादगाउँका राजा रणजीत मल्लको र गोरखाली राजा नरभूपाल शाहको राम्रो सम्बन्ध कायम भयो। पृथ्वीनारायण शाहको भादगाउँको बसाइ उपत्यका कब्जा गर्नमात्र नभएर नेपाल एकीकरणकै लागि महत्वपूर्ण मानिएको छ।

**पृथ्वीनारायण शाहको राज्यारोहण**

सन् १७४२ मा नरभूपाल शाहको देहान्त भयो। पिताको निधनपछि पृथ्वीनारायण शाह २० वर्षको उमेरमा गोरखाका राजा भए। राजा हुनेबित्तिकै मकवानपुरका राजा हेमकर्णसेनले पृथ्वीनारायण शाहलाई आमन्त्रण गरे। उनी गए तर यसपटक पनि उनीसित राम्रो सम्बन्ध हुन नसकेको कारण रानीलाई (इन्द्रावतीदेवीलाई) नलिई रित्तो हात फर्किए।

**पृथ्वीनारायण शाहको युद्धनीति र एकीकरण आरम्भ**

गुमेको आफ्नो जन्मभूमि पुनः प्राप्त गरेर इजरायल आज प्रगतिको शिखरमा पुगेको छ भने हरेक दृष्टिले उर्वर मानिने हाम्रो नेपाल भने विकासको दृष्टिले गरीब देशहरूको सूचीमा अझ कति वर्ष बस्ने हो थाहा छैन। थाहा छैन यसको कायापलट कहिले हुन्छ, कसरी हुन्छ। अहिलेका अधिकांश दायित्व बहन गर्ने नेपालीको मानसिकता पृथ्वीनारायण शाह र उनका सहयात्री, योद्धा तथा गोरखालीहरू भएका भए अहिलेको परिकल्पनासम्म पनि गर्न सक्दैनथ्यौं। यथार्थतः गुरु गोरखनाथले यही तथ्यलाई देखेर पृथ्वीनारायण शाहलाई नेपालको एकीकरण र विस्तारको वरदान दिएका थिए जसबाट सम्पूर्ण नेपालीले आफ्नो गुमेको घर प्राप्त गर्न सक्ने परिस्थिति आयो। गुरु गोरखनाथको काखमा हुर्किएका पृथ्वीनारायण शाह गुरुको आशीर्वाद बोकेर नपालको एकीकरणमा लागे र पूर्ण सफलता पनि पाए।



काशीबाट हतियार भिऱ्याएर गोरखामा पनि आवश्यक हतियारहरू निर्माण गरी नुवाकोट आफ्नो कब्जामा लिन पृथ्वीनारायण शाहले ठूलो प्रयत्न गरे। लमजुङसँग मित्रता गरे, कालु पाण्डेजस्ता सचेत एवं सबल व्यक्तिलाई काजीको पद दिए। युद्ध-सैनिकहरूको स्थिति सबल भयो। अत्यन्त सतर्क र कुशलतासाथ युद्ध गरेर नुवाकोट विजय गरे। कालु पाण्डेको चातुरी र कार्यदक्षताले पृथ्वीनारायण शाहमा सफलताको विश्वास जगायो। यसको फलस्वरूप उनले नुवाकोटको विजय हासिल गरे। उनको युद्धयात्रा रोकिएन। युद्ध र अनुभवको समीक्षा गर्दै भावी रणनीतिको तर्जुमा गर्न लागे। तर दुर्भाग्यवश एउटा गतिशील नेतृत्व दिने र रणनीति तय गर्न सक्ने कुशल व्यक्तित्व कालु पाण्डे कीर्तिपुरमाथि आक्रमण गर्दा बल्खुको घमासान युद्धमा वीरगति प्राप्त गरे। फलस्वरूप पृथ्वीनारायण शाहले पराजय भोग्नुपऱ्यो। उपत्यकाका तीन राजाहरूका बीच अन्तर्कलह चर्किएको कुरा पृथ्वी-नारायण शाहलाई पूरा ज्ञान थियो। यही मौका छोपी आक्रमण गर्न सकिन्छ भन्ने कुरा उनले सोचिरहेका थिए। त्यसैले काठमाडौंलाई विविध किसिमको घेराउमा बनाउने नियत राखी मकवानपुर (आफ्नो ससुराली राज्य) माथि हमला गरे। १७६२ इ. मा आफ्ना तीनजना भाइ कीर्तिमहोद्दाम शाह, दलपति शाह र दलजीत शाहको नेतृत्वमा वंशराज पाण्डे, करसिंह बस्नेत आदि अनुभवी तथा कुशल गोरखालीहरू मकवानपुर गएका थिए। यो आक्रमणमा मकवानपुर विजय गरे। तत्कालीन राजा दिग्बन्धसेन भाग्न सफल भए पनि उनका परिवार चाहिं आत्मसमर्पण गर्न बाध्य भएका थिए। यसको लगत्तै गोरखालीहरूले तिमाल र सिन्धुलीगढीमाथि आफ्नो कब्जा जमाए।

गोरखालीहरूले उपत्यकाको चारैतिर नाकाबन्दी गराएका थिए। यसले उपत्यकाको अवस्था साह्रै शोचनीय बनाएको थियो। १७६३ इ. सम्म गोरखालीहरूले धुलिखेल, चौकोट, पनौती, खड्पू आदि कब्जा गरी बनेपा उपत्यकामा आफ्नो अधिकार जमाउन सफल भएका थिए। सन् १७६४ सम्म फर्पिङ्ग, चोभार र पाँगा पनि कब्जा गरे। त्यसपछि त्यही सालको असोज महिनामा कीर्तिपुरमाथि पनि विजय हासिल गरे। यो विजयले पृथ्वीनारायण शाह र उनका सेनाको बढी हौसला र मनोबल बढायो। त्यसपछि पनि सैनिकलाई अझ सुदृढ पारी उपत्यका पूर्ण कब्जा गर्ने यत्न गरि नै रहे। फलस्वरूप इ. सन् १७६८ को २५ सेप्टेम्बरको राति काठमाडौं सजिलैसित कब्जा गरे। त्यसपछि भादगाउँ पनि आफ्नो हातमा पारे र पूर्व मोरङ्गसम्म पुगे। पश्चिममा भने चेपे र मर्स्याङ्दीपारि तर्न सकेका थिएनन्। तर पनि पृथ्वीनारायण शाह आफ्नो लक्ष्यप्राप्तिका लागि अविचलित भएर अगाडि बढि नै रहे। सप्तगण्डकी क्षेत्रमा परास्त भए मनि पूर्वी क्षेत्रमा पृथ्वीनारायण शाहलाई पूर्ण सफलता मिल्यो र उनका भावी सन्तानले उनको लक्ष्य, आदर्श र दायित्वको महसुस गरी पूर्वमा टिष्टा नदी, प्रश्चिममा काङ्गडा, उत्तरमा तिब्बत पुगेका थिए भने दक्षिणमा भारतका निकै भाग कब्जा गर्न सफल भएका थिए। पछि दुई देशको सम्झौतामा जितेका केही भाग भारतलाई फिर्ता दिइयो जसको चर्चा अहिले पनि गरिन्छ।

**पृथ्वीनारायण शाहको अमर व्यक्तित्व**

पृथ्वीनारायण शाह नेपाली इतिहासका एक मूर्धन्य व्यक्तित्व हुन्। गौतम बुद्धले विश्वलाई शान्तिको सन्देश दिएका छन्। सीताले एउटी आदर्श छोरी, आदर्श पत्नी, आदर्श बुहारी र आदर्श आमाको प्रतीक दिएकी छिन् भने पृथ्वीनारायण शाहले आजको नेपालको

निर्माण गरी विश्वलाई राष्ट्रियताको पाठ सिकाएका छन् । पृथ्वीनारायण शाह नै पहिलो नेपाल राष्ट्रनिर्माता हुन् जसले नेपाली राष्ट्रियताको जग बसाले ।

पृथ्वीनारायण शाहको पूरा जीवन युद्ध र विजयमा बित्यो । सैनिकका रूपमा उनको जीवन सफा थियो । उनी साहसी योद्धा थिए र महत्वपूर्ण र निर्णायक युद्धक्षेत्रमा आफैं उपस्थित हुन्थे । सधैं व्यस्त र सतर्क हुनुपर्ने उनको सैनिक जीवनमा कला तथा साहित्यले कुनै ठूलो स्थान लिन सकेन । तर आफूले कम पढेको भए तापनि उनका दरबारमा ललितबल्लभजस्ता कवि र पण्डित, जयमङ्गल, महेश्वर, हरिदत्त, कुलानन्द, बालकृष्ण आदि विद्वान्हरू थिए । उनी विद्वान्हरूको निकै सम्मान गर्थे । वास्तवमा देशको एकीकरणको साथै नेपाली भाषा-साहित्यमा पनि अघोषित रूपमा यसै बेलादेखि जागरूकता आएको मान्न सकिन्छ । यसै गरी नुवाकोटको दरबार र वसन्तपुरको दरबारले उनको कलाप्रतिको रुचि देखाउँछ । उनी रूढिवादी थिएनन् । उनी समयको चालसँगै विकासको क्रम देख्थे । उनी बुद्धधर्मलाई पनि हिन्दूधर्मलाई जस्तै आदर र सम्मान गर्थे तर इसाईहरूलाई भने देशबाट निस्काशन नै गरेका थिए ।

पृथ्वीनारायण शाहको अथक लडाइँ, राष्ट्रनिर्माणको र राष्ट्रियताको पहिचानले आज प्रत्येक नेपालीलाई नेपाली बन्ने र राष्ट्रका निम्ति बाँच्ने पाठ सिकाउँछ । उनी सङ्कीर्ण थिएनन्, उदार थिए । त्यसैले पराजित राज्यका मानिसहरूलाई समेत उनको माया थियो र परास्त मानसिकताबाट मुक्त पार्न र भावी पुस्ताहरूसमेत अटाउने गरी उनले 'गोरखा' को सट्टा आफूले कब्जा गरेको सम्पूर्ण भूमिको नाम नेपाल राखे । वास्तवमा नेपाल चार जात छत्तीस वर्णको फूलबारी हो भनेर जुन उद्‌गार व्यक्त पृथ्वीनारायण शाहले गरे त्यो अहिले पनि उत्तिकै सान्दर्भिक छ । यो उद्‌गारले सङ्कीर्णतालाई नाघेर एकतामा अनेकताको मेल र सह-अस्तित्वको सन्देश दिएको छ । यदाकदा साम्प्रदायिकताको बादल देखिए पनि आजसम्म नेपाली धरातलमा अन्यत्रजस्तो साम्प्रदायिकताको कारणले अशान्ति भएको छैन । तर यसको अर्थ प्रत्येक समुदायले सचेत र संयम नबन्नु भन्ने चाहिं होइन ।

समयचक्र घुमिरहेकै हुन्छ । यसको चुनौति जन्मने हरेकलाई छ । हावालाई छ, पानीलाई छ, माटोलाई छ । हरेक प्राणीलाई झैं प्रत्येक मानिसलाई पनि छ । यो चक्रमा पृथ्वीनारायण शाह पनि परे । तर छोटो जीवन भए पनि कर्मशील व्यक्तित्व छोडेर गए । नेपाल राष्ट्रलाई अनुप्राणित गराएर इहलीला समाप्त गरे । सदाझैं जाडो छल्न नुवाकोट गएका राजा (१७७४ सन्‌मा) अचानक बिरामी भए । चलनअनुसार उनलाई त्रिशूली गण्डकीको तटमा ल्याइयो । त्यहीं उनी दिवङ्गत भए । उनका साथमा उनकी महारानी र रानीहरू पनि सती गए । यही हो एक होनाहार गोरखाली राजाको इतिवृत्त । यही हो एउटा ऐतिहासिक महाराजाको छोटो तर गरिमामय जीवनी । यही हो बाबा गोरखनाथका शिष्यको वीरताको कहानी । यथार्थमा उनी एक सबल राजा थिए र सिङ्गो देश, एकताका प्रतीक थिए । आज पनि उनी अमर छन् । अमर रहनेछन् नेपाल फूलबारीका माली ।

**सन्दर्भग्रन्थ**

(१) बालचन्द्र शर्मा : नेपालको ऐतिहासिक रूपरेखा (२०२६)

(२) Munshi Shew Shunker and Pundit Gunanad : History of Nepal (Translation) 1972



# राष्ट्रिय एकीकरणमा गण्डकी क्षेत्र महान् हो

**- तुलसीप्रसाद न्यौपाने**

नेपाल अधिराज्यको विस्तार तत्कालीन नेतृत्वहरूको आफ्नै शैलीमा भयो । श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको चातुर्य, तीक्ष्णता र राज्यसञ्चालनमा जनपरिचालनको भूमिका अति नै समसामयिक मानिन्छ । हामी पुस २७ गतेको दिन महान् व्यक्तित्व सम्झनामा प्रत्येक वर्ष पृथ्वीजयन्ती तथा एकतादिवसको रूपमा मनाउने गर्छौं । वास्तवमा अरु मुलुकमा भएको भए राज्यविस्तारको विषयमा पृथ्वीनारायणबारे कैयौं PH. D. भैसक्ने थिए होलान् । मलाई थाहा छैन नेपालमा हालसम्म कतिजनाले यस किसिमको अध्ययन गरेका होलान् ।

सानै भए पनि बहुभाषी, बहुजाति, बहुसंस्कृति र बहुवातावरणीय परिवेशमा रहेको छ नेपाल । यसमा अमूल्य गुणहरू छन् मानिसले निर्माण गरेका र प्रकृतिले वरदान दिएका । तर यहाँका मानिसहरूको देन संसारमा फैलिएको छ, यहाँभित्र भने धूलोमा मणि हराएजस्तै देखिन्छ ।

यसको अनुहार उज्यालो पार्ने प्रतिबद्धतामा सङ्कीर्णता देखापर्दछ । नेपालका साना-साना राज्यहरूलाई एकीकरण गर्ने काम त बल र बुद्धिकै थियो होला । मकवानपुरे राजा र बनारसका राजपूतका छोरीहरूसँग विवाहसम्बन्ध गाँस्नुमा यही बढी दूरदर्शिता देखिन्छ कि बागमती र गण्डकी क्षेत्रका राज्यहरूलाई असजिलो परिस्थितिमा आफ्नो नियन्त्रणमा लिनु । गण्डकी क्षेत्रबाट बागमती क्षेत्रमा प्रवेश गर्दाको कठिन अवस्था नै यो राज्यको मूल जरो बन्न गएको छ ।

वास्तवमा साधारण जनता बिसे नगर्चीदेखि उच्च व्यक्तित्व कालु पाण्डेसम्मका व्यक्तिहरूलाई प्रभाव पारेर सम्पूर्ण जनताको सहयोग र साहसका साथ काम गर्नु, युद्धमा पराजित हुँदा पनि धैर्यधारण गरेर आक्रमणलाई निरन्तरता दिनु पृथ्वीनाराण शाहका अद्वितीय गुणहरू देखिन्छन् नेपाल अधिराज्यको विस्तारका क्रममा ।

नेपाल उपत्यका कब्जा गरिसकेर पनि पृथ्वीनारायण शाहले यहाँको हिन्दू र बौद्धधर्म र संस्कृतिको संरक्षण गरेका हुन् । त्यस बखतमा इसाईहरूले नेपालमा हिन्दूधर्मका विरुद्ध प्रचार गरेर इसाई धर्मप्रचारको काम व्यापकरूपमा गरेका र मुसलमानहरूले प्रवेश पाएर आफ्नो जग हालिसकेको अवस्थाबाट हिन्दूसंस्कृतिलाई जोगाएको कुरा इतिहासले प्रमाणित गर्दछ ।

उनले त्यो परिस्थितिलाई निस्तेज पारिदिए र तत्कालीन धर्म र संस्कृतिको रक्षा गरे । त्यतिमात्र गरेनन्, उपत्यकाका जनजातिको धर्म, संस्कृति, चालचलन र चाडपर्व सबैलाई संरक्षण र सम्वर्धन गर्ने काम गरे । उनले कहिल्यै पनि जाति र धर्मका बीचमा फाटो ल्याउने सङ्कीर्णता आउन दिएनन् । सबै जनतालाई नेपाल फूलबारीको माली बनाउने प्रयास गरे । जातीय विभाजन, धार्मिक विभाजन र भाषिक विभाजनका कुरा कतै

देखिएनन्, हाल बरू साम्प्रदायिक कृयाकलाप र गरीबीलाई अगाडि सारेर शोषणका माध्यमबाट धर्मप्रचार देखापर्न थालेको छ ।

यदि पृथ्वीनाराण शाहले साना-साना राज्यहरू र काठमाडौं उपत्यकासमेत मिलाएर नेपाल अधिराज्यको निर्माण नगरेका भए यसको स्वरूप कस्तो हुने थियो होला भनेर कल्पना गर्न सकिन्छ । तत्कालको अवस्थामा छरछिमेकको नेपालप्रतिको दृष्टिकोणलाई निस्तेज पार्ने काम चातुर्यपूर्वक भएको पाइन्छ । बरू वर्तमान अवस्थालाई विगतसँग तुलना गर्ने हो भने वर्तमानमा साना जातिगत समूहमा विभाजनहरू र धार्मिक अतिक्रमणका कुरा यदाकदा सुन्न र देख्नमा आएका छन् ।

राष्ट्रिय ऐतिहासिक र सांस्कृतिक पक्षसँग आधारित कुराले राष्ट्रियतालाई दरो बनाउँछ, यदि यसभित्र सङ्कीर्णता र साम्प्रदायिकता देखापरेमा राज्यसत्ताको सन्तुलन खलबलिन सक्दछ । राष्ट्रिय एकता पनि कमजोर हुन सक्दछ ।

लिच्छवि र किरांतकालीन अवस्थामा विकसित हुँदै आएको वागमती उपत्यकाको सभ्यतामा मल्लकालीन अवस्थाले झन् विकास गरेको स्थितिमा मल्लकालीन नेवारी संस्कृतिलाई श्री ५ पृथ्वीनारायण शाहले संरक्षण दिए, नेवार जातिहरू उपत्यकाभन्दा बाहिरतिर पनि प्रवेश गर्न थाले र यहाँको संस्कृति नेपालका अरु भागमा पनि प्रचार हुने मौका मिल्यो । व्यापार तथा व्यवसायमा उनीहरू संलग्न गराइए ।

यसलाई खास गरेर नेवारहरूले बढी मान्ने भीमसेन देवताको मन्दिर निर्माण र पूजाआजालाई लिन सकिन्छ, जहाँबाट राँगाको भोग चढाउने प्रचलन बढेको हो । त्यस्तै गाईजात्रा, रोपाइँजात्रा, लाखे (भीमसेन) जात्राजस्ता जात्राहरूबाट वागमती उपत्यकाको संस्कृतिसमेत बाहिर फैलाएर एकीकरणलाई मद्दत पुऱ्याए । यो काम निकै दूरदर्शी हुन गएको पाइन्छ ।

वास्तवमा यक्ष मल्लपछिको मल्ल शासनकालमा आपसमा मनमुटाव हुँदै गएको र आपसी कलहले चरमता पाइसकेर कमजोर राज्यसञ्चालनको अवस्थामा रहेकै कारण पृथ्वीनारायण शाहको आकांक्षा र जनताको चाहनाअनुरूप नै उपत्यका शाह राजाको कब्जामा पर्न पुगेको हुनपर्छ ।

हुन त वागमती क्षेत्रका राजाहरू सबै हिन्दू नै भए पनि यिनीहरूलई इसाई र मुसलमान समूह (कलकत्ता र लखनउ) ले आफ्नो धर्मका माध्यमबाट असजिलो अवस्थामा लान खोजेको अवस्था पनि थियो । यी सारा कमजोरीलाई विश्लेषण गरेर नै श्री ५ पृथ्वीनारायण शाहले राज्यविस्तार-अभियानलाई प्रखर रूप दिएको हुनुपर्छ ।

वर्तमान व्यवस्था राज्यएकता र राष्ट्रियतालाई प्रजातान्त्रिक परिपाटीअनुरूप सबै जाति, समूह, धर्म, क्षेत्रलाई सन्तुलित गरेर लगी आर्थिक विकासका माध्यमबाट विश्वको बदलिंदो परिस्थितिअनुरूप जनजीवन उठाउनुपर्ने अवस्था हो । सम्झनुपर्छ सबैले 'मेरा साना दुःखले आर्ज्याको मुलुक होइन, सबैलाई चेतना भया' भन्ने महावाणी, विशेषतः राज्यसञ्चालनमा अग्रगामी भूमिका निर्वाह गर्छु भन्नेहरूले ।





# प्रजातान्त्रिक राजा पृथ्वीनारायण

– केशव मरहट्ठा

एउटा सानो टापु र त्यस टापुमा रहेको कलापूर्ण दरबार, विलक्षण प्राकृतिक सौन्दर्यले घेरिएको परिसर, एउटा सानो बजार दरबारको फेदीमा, अनि शिक्षित-सुसंस्कृत जनसमुदायको बसउठका साथ धार्मिक अस्मितालाई जीवन्तता प्रदान गर्ने आत्मिक परिवार – यसैभित्र भएको थियो नेपाल एकीकरणका महान् नेता पृथ्वीनारायण शाहको जन्म । स्व. पुर्खा द्रव्य शाहलाई गोरखालीहरूले लगाएको गुनको प्रतिफल पनि थियो यिनको एकीकरणको आकांक्षा, अनि समयानुकुल जनध्वनिको कदर गर्ने क्षमतावान् नेताको उत्कट अभिलाषा पनि थियो एकीकरणको प्रारम्भ । सम्पूर्ण गोरखाली नागरिकहरूको आवश्यकता पनि थियो पृथ्वीनारायणको एकीकरण अभियान । यदि पृथ्वीनारायणले एकीकरणलाई आफ्नो प्रमुख मुद्दा नबनाएका भए शायद द्रव्य शाहलाई गोरखालीले लगाएको गुनको ऋणी हुनुपर्थ्यो या जनध्वनिको कदर गर्न नसक्ने, नागरिकको आकांक्षा बुझ्न नसक्ने अकर्मण्य राजाको रूपमा पनि गनिन सक्थे । तसर्थ पृथ्वीनारायण शाहको एकीकरणको साथमा यी मूल प्रतिष्ठाहरू गाँसिएका छन् जुन बाध्यता थियो ।

एउटा कुशल राजनीतिज्ञ उसको कुशलतालाई प्रदर्शन गर्ने अवसरको खोजीमा रहन्छ । द्रव्य शाहपछि राम शाह र तत्पश्चात् पृथ्वीनारायण शाह तत्कालीन शाहवंशीय राजाहरूका प्रमुख नामहरू हुन् । द्रव्य शाहले केवल गोरखालीहरूको मनोच्छा पूर्ण हुने माध्यमको मात्र काम गरे । उनको शासनपद्धति भन्नु नै उनलाई राजा बनाइछोड्ने गोरखालीहरूको मार्ग प्रशस्त गर्नु रह्यो । जातीय सङ्घर्ष, वादप्रतिवादमा अल्झिएको तत्कालीन गोरखा राज्यले केवल यिनै दुई स्थितिको अन्त्य चाहेको थियो । सुरक्षित सीमारेखाभित्र आबद्ध गोरखाले तत्काल शान्ति-सुव्यवस्था चाहेको थियो र त्यसबखतको परिपाटीभित्र एउटा योग्य नेता चयन गर्नु गोरखालीको बाध्यता थियो । समयले त्यस्तै गोरखाली जन्मायो, जसले लमजुङबाट माथि उठ्ने परिकल्पना गऱ्यो र लमजुङमा बस्न नपाउने राजालाई गोरखाले राजा बनाइछाड्यो । लिगलिगको दौडमा गाँसिएको किम्बदन्तीभित्र चाहे द्रव्य शाहलाई साँच्चै दौडमा भाग लिन लगाइएको होस् वा छल गरेर पहिले नै टुङ्गोमा पुऱ्याएर गद्दीमा बसाइएको होस्, यसले कुनै ऐतिहासिक मान्यता ग्रहण गर्न सक्तैन । इतिहास त्यही बोल बोल्छ जसमा निरन्तरता रहोस् र प्रतिफलले जीवन्तता पाओस् । तसर्थ द्रव्य शाहलाई स्मरण गर्दा गोरखा राज्यको स्थापना सम्झनुपर्छ । यसरी नै दोस्रा चर्चित राजा राम शाह सम्झँदा 'उनकी रानी मनकामना भगवती थिइन् रे' भन्नुभन्दा गोरखा राज्यको आचारसंहिता तयार गर्ने राजा भनेर सम्झनुपर्छ ।

हामी पृथ्वीनारायण शाहको नाम प्रतिवर्ष सम्झन्छौं । यो हाम्रो उनीप्रतिको कृतज्ञताको अभिव्यक्ति हो जो हुनुपर्छ र हुनैपर्छ । यदि यसो नभएमा हामीले इतिहासप्रतिको आस्थालाई पनि नकारेको ठहर्छ । यसका साथै पृथ्वीनारायण शाहलाई एकताको प्रतीक र बडामहाराजाधिराजको उच्च आदर प्रदर्शन गर्दा एक-दुई यस्ता

कुराहरू पनि छन् जसलाई नेपालीले भुल्नुहुँदैन । व्यक्ति समाजका लागि र समाज राष्ट्रका लागि गौण हुन्छ । सिङ्गो राष्ट्र र यसप्रति सम्पूर्णबाट जन्मिएको राष्ट्रियता नै वास्तवमा सार्वभौमिकता हो भन्ने वस्तुसत्यलाई एकैसाथ स्मरण गरेपछिमात्र राष्ट्रनिर्माण र राष्ट्रनिर्मातालाई केलाउन सकिन्छ।

एउटा सहज प्रश्न जोकोहीको अन्तस्करणमा उब्जिन सक्छ – मनकामनाजस्ताका पति हुने सौभाग्य पाएका राजा राम शाहले किन नेपाल एकीकरणको अभियानको सोचाइ राखेनन् होला ? हिन्दू धर्मावलम्बी हामी नेपालीलाई हाम्रो सोचाइको अस्तित्वभित्र देवदेवीको दृढ आस्थाजगत्को सर्वोत्कृष्ट आस्था भन्ने कुराको पूर्ण छाप छोडेको छ । हुन पनि यसको आस्था विना हाम्रो कोमल मन चिथोरिन पुग्छ र सामाजिक संरचनामा समेत विखण्डन आउँछ । तसर्थ स्वभावतः तत्कालीन समयको चक्रवर्तीत्वको उच्च आकांक्षा राजा राम शाहमा नहुनु एउटा कौतुक विषयवस्तु बन्न सक्छ । यो स्वाभाविक पनि हो । यसैले शाहवंशीय राजाहरूमा हिन्दूधार्मिक छाप कसरी रहनुपर्ने हो भन्ने उदाहरणसमेत राम शाहबाट स्थापित भएको देखिन्छ।

'सर्वजन हिताय, सर्वजन सुखाय' यो हिन्दूधर्मको समाजसम्बन्धी अवधारणाको उत्कृष्ट र सर्वोच्च मान्यता हो । वर्तमानसम्म पनि कुनै पनि आधुनिक समाजशास्त्रीहरूले यस स्तरसम्मको मान्यता स्थापित गर्ने परिभाषा दिन सकेका छैनन्, यसैले यसको उत्कृष्टता सर्वोच्च छँदैछ । राजा राम शाहले तत्कालीन समाजको अध्ययन गरे । उनले वास्तविक क्षणलाई सर्वोपरि ठाने । यसमा पनि तत्कालीन गोरखाली समाज र सामाजिक परिवेशको अध्ययन गरे । यसका अतिरिक्त त्यसबेलाको भण्डै विश्व नै जस्तो मानिने भारतको वस्तुस्थितिको अध्ययन गरे । विश्वपरिवेशमा बढ्दै गएको विधर्मी-विस्तार र आफ्नो राज्यको स्थिति । यसलाई सन्तुलन गर्ने मार्गको अवलम्बन उनका लागि प्रथम प्राथमिकताको विषय बन्यो । तसर्थ उनी सन्तुलित समाजको परिकल्पनामा व्यस्त रहे । त्यसबखतको भाषामा 'थिति लगाउने' कामलाई उनले प्राधान्य दिए । यदि यसो नगरी एकीकरणतर्फ उनको ध्यान गएको भए संभवतः उनी एक अयोग्य शासक बन्नुपर्थ्यो र शाहवंशीय राजाहरूको निरन्तरतामा बाधक बन्नसमेत सक्थे । तसर्थ असल राजनीतिज्ञ वा शासकले समाजको आवाज बुभ्नुपर्छ । विशाल राज्यको परिकल्पनालाई छोडेर ढक-तराजु र माना-पाथीदेखि मुठी-चिम्टीसम्मको कार्यमा लागेका राम शाह 'न्याय हराए गोरखा जानू' का प्रतिपादक बन्न सके । गोरखालीले लमजुङे राजकुमारलाई आफ्नो आँगनमा कुल्चाएर कहिल्यै आफ्नो अस्तित्व गुमाएको अनुभव गरेनन् । यसैका उपज हुन् पृथ्वीनारायण शाह । पृथ्वीनारायण शाह सिङ्गो गोरखामात्र नभई सिङ्गो नेपाल हुनुको गर्व हो गोरखा ।

मानिसलाई जसरी जन्मपश्चात् जन्मदाताको प्रभाव पर्छ त्यसैगरी जन्मभूमि र सामाजिक परिवेशले पनि गहिरो प्रभाव पारेको हुन्छ । पृथ्वीनारायणको जन्मका साथ नरभूपाल शाह र कौशल्यावतीको जुन प्रभाव पर्‍यो, गोरखा राज्य र चन्द्रप्रभादेवीको सामाजिक परिवेशले पनि प्रभावित बनायो । गोरखनाथबाबासँगको दहीको प्रसङ्गदेखि इष्टदेवी कालीको सत्प्रेरणाले पनि प्रभाव जमायो । यसका अतिरिक्त विहानको सूर्योदय हुने डाँडादेखि सूर्यास्त हुने भन्ज्याङले पनि पृथ्वीनारायणलाई छोइ नै रह्यो । राम शाहले स्थिति बाँधेको गोरखा राज्य र त्यहाँका वासिन्दाको मनोभावनाले पनि उनलाई उत्कृष्ट बनाउन



सम्पूर्ण सहयोग गऱ्‍यो । यही थियो एकीकरणको आकांक्षामा आबद्ध पृथ्वीनारायण शाहको तत्कालीन वास्तविकता ।

उतिखेर गोरखा राज्यमा सिङ्गो एकात्मकताको भावना थियो । दुर्गहरू सुरक्षित र संरक्षित थिए । नियमहरू समयोचित र समयोपयोगी थिए । रैतीहरूमा सुरक्षात्मक प्रत्याभूति अकण्टक थियो । राज्यव्यवस्थाका सञ्चालकमा पूर्ण विश्वास र अगाढ श्रद्धा थियो । यसका परिवेशनिर्माताहरू शाहवंशीय राजाहरू नै भएका हुँदा त्यस वंशप्रतिको आस्था पनि गोरखालीहरूमा प्रचुरमात्रामा थियो । यस अर्थमात्र सम्भव भएको हो एकीकरण अभियान ।

समसामयिक परिस्थितिलाई आफ्नो अनुकूल बनाई त्यसको प्रत्याभूति जनसमक्ष पुऱ्याउन सक्नु राजनीतिज्ञको अर्को प्रमुख गुण हो । यसका अतिरिक्त आफ्ना आसपासका राज्यहरूको राज्यसञ्चालनप्रकृया र शासकहरूको कार्यकुशलताप्रति चनाखो रहनु अर्को गुण हो । यी दुवै गुणलाई आफ्नो जीवनमा उतारी शासनसञ्चालनमा संलग्न हुने राजाको कार्यशैली पनि हो एकीकरणको अभियान ।

पृथ्वीनारायण शाहमा रहेका गुणहरूमा अर्को मुख्य गुण थियो कुनै पनि निर्णय प्रजातान्त्रिक तरिकाबाट गर्नु । यहाँनेर प्रजातन्त्र भन्नाले जनताको रुचिअनुसार हुने काम भन्ने जान्नुपर्छ । पृथ्वीनारायणको दरबारमा केवल दरबारियाहरूको मात्र बाहुल्य रहँदैनथ्यो । वर्तमान विश्वको प्रजातन्त्रमा प्रजाहरूबाटै छानिएर आएका जनप्रतिनिधिहरूले राज्यसञ्चालनको कार्य गर्दछन् । नियम बनाउने, कानूनको निर्माण गर्नदेखि योजनाको तर्जुमा र कार्यान्वयनसमेत जनप्रतिनिधिहरूबाट गर्ने गरिन्छ । तर तत्कालीन प्रजातान्त्रिक परिभाषा अलिकति पृथक् थियो । जनताले रुचाएका कुशल नागरिकहरूमध्येका असल व्यक्तिलाई छनोट गरी राज्यसञ्चालनको काममा संलग्न गराउनु तत्कालीन प्रजातन्त्रको परिभाषा थियो । यसैको सेरोफेरोमा चलेको थियो शासनपद्धति । तसर्थ प्रथम प्रजातान्त्रिक राजा पनि थिए पृथ्वीनारायण । उनले कालु पाण्डेलाई कज्याइँ (प्रधानमन्त्री) दिनुको पछाडि यही वास्तविकता थियो । जनभावनालाई शिरोधार्य गर्ने क्षमतावान् राजा भएका कारण पनि उनी सफल भएका थिए ।

राज्य र राज्यव्यवस्थाका प्रमुख अधिकारी राष्ट्रका नागरिक हुन् भन्ने दृढ विश्वास थियो पृथ्वीनारायणमा । त्यसैले राष्ट्रलाई सबैको साझा हो भन्ने उद्‌गार व्यक्त गरे । आफ्ना राज्यमा बस्ने विद्वान्‌देखि दलित जातिसम्मको समान अस्तित्व ठान्ने प्रजातान्त्रिक अवधारणाका प्रतिपादक उनले 'बीसे नगर्ची' सम्मको जनमत लिने प्रयत्न गरेका थिए भन्ने इतिहासले स्पष्ट गरेको छ । एकीकरणको अभियानलाई बीसेको एक रुपैयाँ र दलित भनिएकाहरूमा रहेको राष्ट्रिय चिन्तन र आर्थिक विश्लेषण दुवैलाई सूचित गरेको छ । यसैलाई भनिन्छ सत्ताकुशलता । यदि त्यसबखत राजाले आफ्ना रैतीहरू (त्यसबखतको भाषाका नागरिक) सँगको सान्निध्य कायम गर्न नसकेको भए या जनभावना बुझ्ने प्रयत्न नगरेका भए र पृथ्वीनारायणमा केवल आफ्नो दरबारी मोह रहेको भए उनका समयमा पनि राष्ट्रिय एकता असम्भव थियो । त्यसैले पृथ्वीनारायणलाई अध्ययन गर्न प्रजातान्त्रिक राजाको रूपमा गरिनुपर्छ । उनको राज्यसञ्चालनशैली र एकीकरण अभियान एक-आपसमा समयसापेक्ष थियो । बढ्दो जनघनत्वले विस्तारित राज्यको परिकल्पना गर्ने समय र

प्रजातान्त्रिक योग्य शासकको आवश्यकता । प्रजाले चाहेका यी दुई विद्यमान अवस्था र छिमेकी राज्यहरूको आपसी कलह सर्वपक्षीय एकीकरणबाट सम्भव थियो । तसर्थ उनी सफल भए र सिङ्गो नेपालले मूर्तरूप लिन पायो ।

शक्तिवल्लभलगायतका विद्वान्हरूको सुसल्लाह, कालु पाण्डेजस्ता दुनियाँले रुचाएका मुख्तियार र सर्वोच्च धार्मिक आस्थामा सुसंस्कृत दरबारी परिवेश । यिनै मुख्य तीन कारणहरू थिए एकीकरण सफलताको । तसर्थ राजामा हुनुपर्ने सर्वोच्च गुण जनमत र जनध्वनिको कदर गर्ने पक्ष पृथ्वीनारायण शाहमा थियो । तत्कालीन प्रजातान्त्रिक मूल्य र त्यसप्रतिको मान्यतालाई पृथ्वीनारायणले आत्मसात गरेकै कारण उनी प्रजातान्त्रिक राजा र एकीकरणका पिता बन्न सफल भए ।





# राम शाहको न्यायव्यवस्था

**– शुभनराज आचार्य**



नेपालको न्यायिक इतिहासमा राजा राम शाहको उल्लेखनीय भूमिका रहेको छ । न्यायप्रेमी राजा राम शाह सुधारवादी प्रकृतिका भएकाले हरपल प्रजालाई कसरी सुखसुविधा पुऱ्याउन सकिन्छ भन्ने कुरामा तल्लीन रहन्थे । नेपालको इतिहासमा राम शाहले गरेका न्यायिक सुधारको विशेष महत्त्व रहेको छ ।

त्यसबेलाको समाज, राजनीतिक स्थिति, मौलिकता, सुहाउँदो न्याय-व्यवस्थालाई राजा राम शाहले परिकल्पना गरी जनतालाई छिटो, छरितो र प्रभावकारी न्याय दिने व्यवस्था मिलाएका थिए । त्यस समयमा अहिलेको जस्तो विदेशी कानूनको प्रभाव पटक्कै थिएन । गहिरिएर अध्ययन गर्ने हो भने यस्तो निष्कर्ष निस्कन्छ कि त्यसबेलाको नेपालको कानूनी तथा न्यायिक व्यवस्थाको आफ्नै किसिमको स्वतन्त्र अस्तित्व रहेको थियो । अतः त्यसबेलाको न्यायिक व्यवस्थाले मौलिकता बोकेको थियो ।

राजा राम शाहले कस्ता-कस्ता किसिमका स्थिति बाँधेका थिए भन्ने कुरालाई भन्दा उनको न्यायव्यवस्था कस्तो थियो र के आधारमा उनको न्यायिक व्यवस्थाले प्रसिद्धि पायो, सो सम्बन्धमा यो लेख केन्द्रित रहनेछ । ग्रामीण इलाकाका गरीब जनताका लागि न्याय पाउने काम महङ्गो र ढीलो भएकोले उनीहरू मर्कामा परेका थिए । यस्तो प्रकारको व्यावहारिक कठिनाइको कारणले राजा राम शाहले न्यायव्यवस्थामा व्यापक सुधार गरे ।

राम शाहको समयसम्म सानातिना मुद्दाहरू पनि न्यायालयमा नै प्रस्तुत गरिन्थे, जसले गर्दा जनताको समय र पैसाको अधिक खर्च हुन्थ्यो । न्यायसम्बन्धी यस व्यवस्थाबाट गरीब प्रजाहरू अत्यन्त मर्कामा परेका थिए । उनीहरूको लागि न्याय अत्यन्त महङ्गो पर्न गएको थियो । न्यायसम्बन्धी यिनै सब व्यावहारिक कठिनाइलाई ध्यानमा राखी राजा राम शाहले न्यायसम्बन्धी व्यवस्थामा सुधार गरे । यस सुधारअनुसार अब उप्रान्त सानातिना मुद्दाहरू स्थानीय पञ्चायतद्वारा छिनिने भए ।[1] यसप्रकार यिनको दृष्टिमा दूरदर्शिता र दिमागमा सुधारवादी विचारधारा थियो । यिनी कूटनीतिज्ञ हुनुका साथै न्यायप्रेमी पनि थिए । त्यसैले न्याय नपाए गोरखा जानू भन्ने उक्ति सुन्नेबित्तिकै राजा राम शाहको सम्झना हुन्छ । राजा राम शाहले प्रख्याति पाउनुको पछाडि जनतालाई सच्चा र स्वच्छ न्याय प्रदान गर्नु नै हो । त्यसकारण यिनको नाम नेपालको इतिहासमा अग्रपङ्क्तिमा आउँछ ।

राम शाहले चलाएको स्थितिमा 'झगर सुन्नु' 'दण्ड गरिलिनु' भन्ने शब्दहरू उल्लेख भएकाले त्यसबेला सबै प्रकारका मुद्दामामिलाको प्रारम्भिक सुनुवाई स्वयं राजाले मात्र नगरी राजाबाट अधिकारप्राप्त निकाय वा व्यक्तिले पनि सो अधिकार प्रयोग गर्ने गरेको कुरा ज्ञात हुन्छ ।[2] माथिको तथ्यबाट यो थाहा हुन्छ कि राजा राम शाह स्वयं पनि न्याय प्रदान गर्ने

कार्यमा उच्च भूमिका निभाउँथे साथै शासनव्यवस्थाको व्यस्तताले न्यायसम्पादनकार्य गर्न नभ्याएको अवस्थामा राजाबाट अधिकारप्राप्त निकाय वा व्यक्तिले न्यायसम्पादनको कार्य गर्न सक्ने देखिन्छ । यसको अलावा जनताले छरितो र सजिलो तरिकाले न्याय पाउन सकून् भन्ने उद्देश्यले मुद्दामामिला हेर्ने र किनारा गर्ने अड्डाको साथै विशेष पदहरूको समेत व्यवस्था गरेको पाइन्छ । राम शाहको शासनकालमा चौतारा, काजी, सरदार, खरिदार, कपर्दार, खजान्ची, टक्सारी, धर्माधिकारी, बिचारी, डिट्ठा, जेठाबूढा, उमराउ सुब्बा र उमराउजस्ता पदहरू रहेको पाइन्छ । गोरखावंशावलीमा 'धर्माधिकार खरीदार भान्से' शब्द उल्लेख भएको समेत पाइन्छ । विशेषतः डिट्ठा, बिचारी, धर्माधिकारीहरूले नै त्यसबेला मुद्दामामिला, हेर्ने र किनारा गर्ने गर्दथे ।[३]

प्रजालाई दुःखकष्ट नहोस्, मुद्दामामिला स्थानीय तहमा नै किनारा होस् भनी राम शाहको समयमा स्थानीय पञ्चायतलाई पनि मुद्दामामिला हेर्ने र किनारा गर्नेसमेत अधिकार प्रदान गरिएको थियो ।[४] राम शाहको शासनकालमा मुद्दा हेर्ने पञ्चायत वा अधिकारी वा अदालतले वादी-प्रतिवादीलाई ढुङ्गा वा शालिग्राम, पान, फूल, द्रव्यहरू छुवाई निजहरूले आफ्नो कुरा कचहरीमा सत्य-सत्य भनेका हुन् वा भन्नेछन् भनी शपथ लिन लगाइन्थ्यो । स्थानीय पञ्चायत वा अधिकारी वा कचहरी (Court) ले छिन्न नसकेका र गम्भीर प्रकृतिका मुद्दाहरूको सुनुवाई राजा राम शाह स्वयंले गर्दथे ।

गोरखावंशावलीमा भनिएको छ – "चौबिसी, बाइसी राजाहरूका मुलुकमा बडाबडा गाह्रा गाह्रा झगडा पऱ्या । कहाँ कसैले छिन्न सक्यानन् । जब गोरखा श्री ५ महाराजा राम शाहका कचहरीमा जाऊ भनी झगडीया जोडी पठाई दिन लाग्या झगडियाको चित्त बुझाई झगडा तोडी बक्सनु हुँदा 'विद्या हराया श्री काशी जानु निशाफ हराया गोरखा जानु' भन्या बोलीको निसाना जो छ त्यो पनि श्री ५ महाराजा राम शाहदेखिन् चल्दो भयो ।" उपर्युक्त कथनबाट राजा राम शाहमा कुशल न्यायकर्तामा हुनुपर्ने गुण विद्यमान थियो र उनको न्यायप्रियताबाटै उनको ख्याति सर्वत्र फैलिएको थियो भन्ने स्पष्ट हुन्छ । दूरदर्शी विधिकर्ता र कुशल न्यायकर्तामा हुनुपर्ने गुणहरू भएका राम शाहजस्ता राजाहरू विरलै हुन्छन् ।[५]

वास्तवमा विधिविधानको निर्माण, न्यायालयको स्थापनाजस्ता कुराहरू त्यति बेलासम्म महत्वपूर्ण हुँदैनन् जबसम्म उक्त विधिविधान व्याख्या गर्ने, लागु गर्ने व्यक्ति, न्यायकर्ताहरू तथा न्यायप्रशासनमा कार्य गर्ने प्रशासक र कर्मचारीहरू दक्ष, निष्पक्ष, कर्तव्यपरायण हुँदैनन्। हामीले आजको न्याय-व्यवस्थालाई अध्ययन गऱ्यौं भने यो प्रमाणित हुन्छ कि सामान्य जनताले अदालतप्रतिको आस्था गुमाउन थालेका छन् । किनभने यहाँ कानून पनि छ, अदालत पनि छ तर कानूनका व्याख्याता र अदालतमा काम गर्ने प्रशासकहरूले स्वच्छ प्रशासन दिन सकेका छैनन्।

राम शाहको न्यायव्यवस्थाले त्यसै चर्चा पाएको थिएन, त्यसबेलाको न्यायप्रशासनमा जनताको मर्कालाई बुझेर आवश्यकताअनुसार सुविधापूर्ण किसिमबाट उपयुक्त व्यवस्था गरी छरितो र छिटो न्याय दिने गरिन्थ्यो । न्यायप्रशासनमा कार्य गर्ने व्यक्ति निष्पक्ष, विद्वान्, अनुशासित र दक्ष हुनुपर्दथ्यो । जनताले जति सक्यो छिटो र सजिलो तरिकाले न्याय पाउन सकून् भन्ने उद्देश्यले स्थानीय ग्राम पञ्चायतलाई समेत



राजा राम शाहले विवादको निरूपण गर्न सक्ने अधिकार दिएका थिए । नैतिकवान् र दक्ष व्यक्तिमात्र न्यायकर्ता कुन सक्दथ्यो भने मुद्दामा वादी तथा प्रतिवादीलाई शपथ खुवाई सत्य-सत्य बोल्न प्रोत्साहित गरिन्थ्यो, जसले गर्दा पीडित पक्षले न्याय पाओस् । स्थानीय निकाय तथा अधिकारप्राप्त निकायले निरूपण गर्न नसकेका जटिल विवादहरू राजा राम शाह आफैंले हेर्ने गर्दथे ।

राम शाहले बाँधेको स्थितिबाट त्यसबेलाको अदालती कार्यविधि फौज्दारी वा देवानीको स्पष्ट चित्रण थाहा पाउन सकिँदैन तापनि उनी संस्कृतका विद्वान् हुनाले मनुस्मृति, याज्ञवल्क्यस्मृति, बृहस्पतिस्मृति र शुक्रनीति आदि धर्मशास्त्रकै आधारमा कार्यविधि निरूपण गरिन्थ्यो भन्न सकिन्छ ।[६] त्यस समयमा सामान्य जनताहरू राम शाहको न्यायव्यवस्थाबाट अत्यन्तै खुशी थिए जसले गर्दा उनको न्यायव्यवस्थाले चर्चा पायो । त्यस समयमा वरिपरिका छिमेकी राज्यलगायत मुग्लानमा समेत राम शाहको न्यायव्यवस्थालाई प्रशंसा गरिन्थ्यो भन्ने कुराको ऐतिहासिक तथ्य इतिहासमा पढ्न सकिन्छ । धर्मशास्त्रमा उल्लेख गरिए-बमोजिमको कार्यविधि अपनाई न्यायप्रशासन सञ्चालन गरिने हुनाले त्यस समयमा धर्ममा आस्थावान् जनताले धर्ममा भरोसा गरी न्याय पाउने कुरामा पूर्णरूपले विश्वास गर्दथे । धर्मको उल्लङ्घन गरेमा दण्डको भागी होइन्छ अर्थात् पाप लाग्छ भन्ने धारणा आम जनताको मानसपटलमा रहेको हुन्थ्यो । अहिलेको जस्तो छाडा संस्कृति, अनुशासनविहीनता त्यस समाजमा थिएन भन्न सकिने आधारहरू प्रशस्त छन् । हालको गोरखा जिल्ला नै त्यसबेलाको गोरखा राज्यको राजधानी थियो । उक्त जिल्लाको स्थानीय क्षेत्रमा अझै पनि विभिन्न कहावत सुन्न सकिन्छ राम शाहको न्यायव्यवस्थाको सम्बन्धमा । 'राम शाहको न्यायको चौतारो' ले प्रख्यातस्थल हालसम्म पनि संरक्षित अवस्थामा नै हामी देख्न सक्दछौं ।

सबैले खेतमा पालैपालो कुलो-पानी चलाउनुपर्ने, धारामाथि रूख रोप्नुपर्ने, कुनै पनि चीजको लेनदेन गर्दा निश्चित दरभन्दा बढी ब्याज लिन नपाउने, नापेर, तौलेरमात्र सामानको किनबेच गर्नुपर्नेजस्ता थुप्रै नियमहरू निर्माण गरी राजा राम शाहले त्यसबेला सामाजिक न्याय (Social Justice) लाई अत्यन्तै महत्व दिएको पाइन्छ । सामाजिक व्यवस्थाको कसैले उल्लंघन गरेको खण्डमा कसुरअनुसारको सजाय दिने व्यवस्थालाई पनि राजा राम शाहले अत्यन्तै प्रभावशाली बनाएका थिए । सामाजिक न्यायको अलावा आर्थिक न्याय (Economic Justice) लाई पनि उत्तिकै महत्त्वपूर्ण स्थान दिएको प्रमाण पाउन सकिन्छ । कसैले पनि कसैलाई ठग्न नपाओस् भन्ने उद्देश्यले उनले नापतौलको व्यवस्था सुनिश्चित तुल्याएका थिए । त्यसैले आर्थिक न्यायलाई महत्व दिएको कुरालाई किटेर भन्न सक्ने अवस्था देखिन्छ ।

त्यसबेलाको सामाजिक न्यायसम्बन्धी व्यवस्थालाई उच्च मूल्याङ्कन गर्न सकिन्छ । गोरखा राज्यमा रहेका प्रत्येक धारा तथा कुवामाथि अनिवार्य रूख रोप्नुपर्ने, सो रूख कोटेमा काट्ने व्यक्तिलाई रू. ५।- जरिवाना गरी त्यस ठाउँमा नयाँ रूख रोप्नुपर्दथ्यो । त्यस्तै धारामाथि नागदेवताको स्थापना, धारावरिपरि दिसापिसाब गरी फोहोर गरेमा नाग लागी बिरामी परिन्छ भन्ने डर देखाई धारावरिपरिको वातावरण स्वच्छ राख्नमा अपनाइएको सावधानी अर्थपूर्ण मान्न सकिन्छ । बटुवाहरूलाई आराम गर्न र शीतलमा बसी थकाइ

मार्नका लागि ठाउँ-ठाउँमा चौतारा निर्माण गरिएको पाइन्छ । यी महत्वपूर्ण सुधारकार्यहरूलाई विश्लेषण गर्ने हो भने अहिलेको सामाजिक न्यायको तुलनामा राम शाहको सामाजिक न्याय सुदृढ देखिन्छ ।

यस्तै-यस्तै सामाजिक न्याय तथा आर्थिक न्यायसम्बन्धी व्यवस्थाले अस्तित्व जोगिएको देश हो यो नेपाल । त्यही सामाजिक न्याय तथा आर्थिक न्याय आजभन्दा ४०० वर्षअगाडिको हो जो आज पनि अध्ययन-मननयोग्य भएको छ र जसबाट प्रशस्त शिक्षा लिन सकिन्छ । राम शाहको पालाको सामाजिक न्याय आज भत्किदैछ, आर्थिक न्यायलाई खल्बल्याइँदैछ । राम शाहको पालाको धारा, कुवा, पाटी, पौवा, कुलो, चौतारो आदि कुनै व्यक्तिको सम्पत्ति भएको छ भने कुवा तथा धारोलाई फोहोरले पुर्दै गएको छ, दिसापिसाब गर्ने शौचालयमा परिणत हुँदैछन् । बाँकी रहेका केही पाटी-पौवा पनि भग्नावशेषमा परिणत भएका छन् । संरक्षणको कुनै प्रयास गरेको पाइँदैन । वचेखुचेका धारामा पानी सुकेर हाहाकार मच्चिन थालेको छ । राम शाहको पालाको जस्तो माना घिउ आज पैसा तिरेर पनि शुद्ध खान पाइँदैन भने दूध गाईभैंसीको मानेर खानुपरेको छ । भात खाँदा ढुङ्गा पहिले दाँतमा लाग्छ, अमेरिकाले इराकमा गोली हान्दा, भारतमा मन्त्री फेरिंदा नून किन्न लाइनमा बस्नुपर्छ, त्यो पनि बालुवा मिसाइएको, खाद्यवस्तुमा अखाद्यवस्तु मिसाइएको चीजलाई हामीले लाइन बसेर उपभोक्ताको खुशीले होइन कि बिक्रेताको नियमबमोजिम किन्नुपर्छ । स्वाभाविक रूपले यहाँ प्रश्न उब्जन्छ कि आज राम शाहको न्यायव्यवस्थामा कति धमिरा लागिसकेछ !

आज यस्ता इतिहास र ऐतिहासिक स्थल केवल कथा भएका छन् । बढीमा पर्यटकहरूका लागि दर्शनीय स्थल भएका होलान् तर हुनुपर्ने त अध्ययन-अनुसन्धानको विषय हो । यस्तो थियो र अहिले यस्तो छ भनी अवस्था जाहेर गर्नुमा मात्र कुनै तुक छैन । राम शाहको न्यायव्यवस्थामात्र होइन यो देशको सम्पूर्ण इतिहासको क्रमिक अध्ययन, अनुसन्धान, संरक्षण इत्यादि हुनु महत्वपूर्ण पक्ष हुन् । कुनै पनि देशको विकासमा त्यस देशको वास्तविक इतिहास मार्गदर्शन वनेको हुन्छ । जुन देशले इतिहासलाई राम्रोसँग बुझेर संरक्षण गरेको छ त्यां देश विकासको चरम सीमामा पुगेको छ । कुनै पनि शिक्षित व्यक्तिहरू उपर्युक्त कुराहरूबाट अवश्य अनभिज्ञ छैनन् । अतः यहाँ जोड दिन खोजिएको कुरा यो छ कि राजा राम शाहको सामाजिक न्याय र आर्थिक न्यायलाई समयसुहाउँदो गतिमा अवलम्बन गर्न सकेको खण्डमा स्वच्छ वातानुकूलित समाजको निर्माण गर्न सकिन्छ भन्ने कुरामा दुई मत नहोला ।

व्यक्ति अनुशासित भए उसको परिवार अनुशासित हुन्छ, लगनशील हुन्छ, यस्तै परिवार-परिवार मिलेर शान्तिपूर्ण समाज बन्छ भने सोही समाज-समाज मिलेर सुन्दर र शान्तिमय देश बन्छ, यसमा कुनै शङ्का छैन । तर आज ठीक यसको उल्टो भएको छ, व्यक्ति अनुशासनको 'अ' सुन्न रुचाउँदैन, लगनशीलता कता हो कता एकै रातमा लखपति बन्ने सपनामा व्यस्त भइदिन्छ । उसले परिवारलाई सही मार्गमा डोऱ्याउनुको बदला भाँडभैलो मच्चाउन थाल्छ, समाज खल्बल्याउने काम गर्छ भने त्यो देशको विकास त के कुरा भविष्यसमेत अन्योल बन्न जान्छ । आज भाँडभैलो मच्चाउनेहरू नेता भएका छन् भने वृद्धि दिने विद्वान्हरू उनीहरूको लौरो भएका छन् । सामान्य नागरिक गोडामा



लगाउने रङ्गीन चप्पल र जुत्ता भएका छन् । यस किसिमको अवस्थामा नेपाल अधिराज्यको संविधानद्वारा परिकल्पित सामाजिक, आर्थिक र राजनीतिक न्याय कसरी प्राप्त गर्न सकिएला र ?

न्याय त्यतिबेला पाउन सकिन्छ जब देशका नागरिक अनुशासित, नैतिकवान्, लगनशील, कर्तव्यपरायण र शिक्षित हुन्छन् अन्यथा न्याय सदैव असजिलो भीरमा फलेको काँक्रोसिवाय केही हुँदैन । त्यसकारण 'न्याय नपाए गोरखा जानू, विद्या हराए काशी जानू' भन्ने उक्तिले इङ्गित गर्दछ कि सामाजिक संरचना सुदृढ भएमा यो देशमा न्याय सर्वसुलभ हुन सक्दछ ।

**पादटिप्पणी**

(१) ढुण्डीराज भण्डारी, नेपालको ऐतिहासिक विवेचना, दूधविनायक बाराणसी - १, पेज १६०, (वि. सं. २०३०)
(२) ज्ञाइन्द्रबहादुर श्रेष्ठ, नेपालको कानूनी इतिहासको रूपरेखा, पैरवी प्रकाशन काठमाडौं, पेज ८० (वि. सं. २०४४)
(३) ऐ. ऐ.
(४) ऐ. ऐ.
(५) ऐ. पेज १६१
(६) ऐ. पेज ८१

# श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको जन्मकुण्डली

**– साम्बराज पाण्डे**

श्री

श्री गणेशाय नमः । श्री मङ्गलमूर्तये नमः ।




**श्री ५ बडामहाराज पृथ्वीनारायण शाहको जन्मकुण्डलीका फलविशेष**

**भावेशको बिभिन्न भावमा फल**

लग्नेश पुत्रमा बस्दा मध्यम पाउने पुत्रसुख ।
प्रथम अपत्यको नाश मानी क्रोधी नृपप्रिय ॥
धनेश पुत्रमा बस्दा धनी सम्मतिले युति ।
धेरै छोराहरू होलान् आर्जलान् सम्पति अति ॥
सहजेश रिपुमा बस्दा भाइको शत्रु अति धनी ।
मामामा शत्रुभाव राख्ने, माइज्यूको प्रिय हुन्छ नि ॥
सुखेश पुत्रमा बस्दा सबैको प्रिय औ गुणी ।
मानवान् विष्णुको भक्त, आफ्नै आर्जनले धनी ॥
पुत्रेश पुत्रमै बस्दा शुभयुत पुत्रले सहित ।
गुणी दयालु मित्रैमा पापयुत पुत्रले रहित ॥
षष्टेश पुत्रमा बस्दा स्वार्थी र धन अस्थिर ।



हुन्छन् छोरा पनि शत्रु दयालु पाउंछ सुख ॥
जायेश पुत्रमा बस्दा मान्य हुन्छ सबै गुण ।
सबै तरहका धनले प्राप्त गर्दछ त्यो सुख ॥
अष्टमेश पुत्रमा बस्दा जन्मन्छन् मूर्ख बुद्धिका ।
थोरै सन्तान नै होलान् आफू दीर्घायु धनयुत ॥
नवमेश पुत्रमा बस्दा पुत्रवान् भाग्यले युत ।
धर्मात्मा गुरुजन मान्ने धैर्यवान् हुन्छ पण्डित ॥
दशमेश शत्रुमा बस्दा बाबुको सुख वञ्चित ।
चतुरो धनले हीन शत्रु गर्छन् पीडित ॥
लाभेश पुत्रमा बस्दा हुनेछन् सन्तति सुखी ।
धर्मात्मा शीलवान् होला बन्छ आफू पनि सुखी ॥
व्ययेश पुत्रमा बस्दा पुत्र विद्याले वञ्चित ।
पुत्रकै निम्ति खर्चन्छ, तीर्थयात्रादि गर्दछ ॥

जन्मकुण्डलीमा भएका बाह्र कोठा नै बाह्र भाव हुन् । त्यस कोठामा बाह्र राशिहरू रहन्छन् । त्यहाँ बस्ने ग्रहहरू नै भावेश हुन्छन् । यसमा सिंह लग्न छ । त्यसैले लग्नेश सूर्य पाँचौं भाव पुत्रमा बसेको छ ।

**मेषादि राशिमा ग्रहहरूको फल**

| | | |
|---|---|---|
| सूर्य | : | धनु (मा) विद्वान् धनी बैद्य, शिल्पी, तीक्ष्ण स्वभाव छ । |
| चन्द्र | : | मकरमा पत्नी पुत्रादिलाई प्रेम गर्दछ सदा ।<br>निर्दयी, बलवान्, अल्छी, निर्लज्ज, भाग्यवान छ ॥ |
| भौम | : | गुरुको राशिको भौमशत्रुयुत मन्त्री निर्भीक ।<br>प्रसिद्ध कीर्तिवान् होला स्वल्प सन्तानकारक ॥ |
| बुध | : | धनमा रहँदा बुधले राजपुजित र पण्डित ।<br>सदा योग्य वचन बोल्ने सल्लाहकार बन्दछ ॥ |
| गुरु | : | स्वगृही भै गुरु बस्दा सेनानायक बन्दछ ।<br>भूमिपति, धनी जातक, राजा भै राज गर्दछ ॥ |
| शुक्र | : | मकर वा कुम्भस्थित शुक्र सबैको प्रियपात्र छ ।<br>निन्दित स्त्रीको प्रेमी, जोइटिङ्ग्रे पनि बन्दछ ॥ |
| शनि | : | धनु जीव मीनमा बस्दा पुत्र, स्त्री, धन संयुत ।<br>ग्राम, नगरप्रधान, योद्धा मानी त्यो अन्त्यसुख छ ॥ |

**भावमा ग्रहफल**

| | | |
|---|---|---|
| सूर्य | | पुत्रमा रहँदा सूर्य कुशील रूपले रहित ।<br>धन आर्जन्छ कुबाटोले हुनेछ मानले रहित ॥ |
| चन्द्र | | शत्रुभावमा हुँदा चन्द्र निर्धन कोमल शरीर छ ।<br>शूरो त्यो तीक्ष्णदृष्टिको मन्दाग्निबाट पीडित ॥ |
| भौम | : | पुत्रस्थान रहँदा भौम कुसन्तान रोगपीडित ।<br>बन्धुबान्धवले त्यक्त हुनेछ बुद्धिहीन मूढ ॥ |

बुध : पुत्रमा रहने बुधले पुत्र-पौत्रादिले युत ।
वुद्धिमान् सत्वगुणयुक्त रहनेछ सुखी सदा ॥
गुरू : पाँचौ जीव हुंदा पण्डित, धर्मात्मा र सुपुत्रवान् ।
शुद्ध चित्त, दयायुक्त, सुखी, विनम्र बन्दछ ॥
शुक्र : छैटौं शुक्र हुंदा दम्भी, जड, हीन, भयभीत सदा ।
दुष्ट र झगडाप्रेमी पिताको द्वेष गर्दछ ॥
शनि : पाँचौं शनि हुँदा कर्म-पुत्र र कीर्तिले रहित ।
कुरूप धनधान्यले हीन, सदा हुनेछ निश्चित ॥

**भावफल सारांश**

क्रोध सूर्य, थोर सन्तति चन्द्रपुत्रले ।
सन्तान दिदैनन्, शनि भूमिपुत्रले ॥
शुक्र, गुरु, शशीहरू सुतस्थानमा वसी ।
सन्तान धेर भै हुनसक्छ है सुखी ॥
मङ्गल, रवि, शनि यी तीन रिपुस्थान बस्दा ।
शत्रुजिता स्वबलि भै अधिकारयुक्त ॥
वुध, शुक्रले रोगी र बुद्धिहीन ।
चिन्तित देवगुरुले शशी आयुहीन ॥
ऐश्वर्य मान रविले रही आय भावमा ।
धन चन्द्रले जमिन धेर दिने भूमिपुत्र ॥
धन आयु दिन्छ गुरुले बुधले विवेकी ।
सद्‌गुण दिनेसित भए तमले सुकीर्ति ॥

**ग्रहहरूको दृष्टिफल**

सूर्य : कुलीन, विद्वान्, धर्मज्ञ, प्रथम सन्ताननाशक ।
धनी, प्रसिद्ध व्यापारी, बुद्धिमान् दृष्टलाभमा ॥
चन्द्र : चन्द्रले व्ययमा हेर्दा अन्तिम समयमा सुखी ।
सदा चिन्तित, राजमान्य, शत्रु खर्च गराउने ॥
भौम : भौमले मृत्युमा हेर्दा ऋणी, रोगी र भाग्यहीन ।
धन-कुटुम्वको नाशक स्वश्रमी तर अर्थहीन ॥
भौमले लाभमा हेर्दा जातक धनवान् हुने ।
कुटुम्बको दुःखले दुःखी, सन्तानकष्ट कुपुत्रले ॥
भौमले व्ययमा हेर्दा रोग लाग्छ गुदद्वारमा ।
शुत्र मातुलको नाशक, स्वभाव उग्र कुकर्मरत ॥
बुध : बुधले लाभमा हेर्दा व्यापारले धनयोग प्रवल ।
पुत्र-पौत्रादिले युक्त, विद्वान्, कलाविशारद ॥
गुरु : गुरुले भाग्यमा हेर्दा शास्त्रज्ञ, भाग्यवान्, कुलीन ।
दानी, स्वतन्त्र, धर्मात्मा, व्रती, सन्तानले सहित ॥
गुरुले लाभमा हेर्दा विद्वान्, दीर्घायु, वुद्धिमान् ।



स्त्री-सुन्दरी, कलाप्रेमी, स्नेही र पाँच पुत्रवान् ॥
गुरुले लग्नमा हेर्दा धर्मात्मा, कीर्तिवान्, कुलीन ।
सुन्दर पतिव्रता पत्नी, हुन्छ विद्वान् र गम्भीर ॥
शुक्र : शुक्रले व्ययमा हेर्दा वीर्यरोगी र चिन्तित ।
विवाहमा व्यय गर्ने स्त्री-द्वेषी शत्रु (बाट) पीडित ॥
शनि : शनिले स्त्रीभाव हेर्दा कलही, धननाशक ।
नास्तिक, नीच काम गर्ने, छत्तीस वर्ष अनिष्ट छ ॥
शनिले लाभमा हेर्दा पाउँछ पछि पुत्रसुख ।
धेरै भाषाहरू जान्ने, व्यापारमा पूर्ण लाभ छ ॥
शनिले धनमा हेर्दा ३६ (वर्ष) तक धननाशक ।
१९ तक रोग, शरीरकष्ट, सदा विरोध स्वजनसँग ॥

भौमले ४, ७, ८ गुरुले ५, ७, ९ र शनिले ४, ७, १० स्थानमा पूर्ण दृष्टि राख्छन् । बाँकी सबै ग्रहहरूले आफू बसेको सातौं स्थानमा दृष्टि राख्दछन् ।

**राजयोग**

**राहुबाट बनेको योग**

जसको राहु वृष वनपति (सिंह) कर्क कन्यामा बस्छ
सेवित हुन्छ विपुल लक्ष्मीले राज राजेश हुन्छ ॥
त्यही राहु उच्चको भै यदि स्थित भए हुन्छ त्यो शास्त्रज्ञानी ।
कुल-दीपक भै सब किसिमका अर्थले भाग्यमानी ॥

**लग्नेशबाट बनेको योग**

लग्नेश बलवान् भैकन बसोस् केन्द्र चतुष्कोणमा ।
लाभस्थानमहाँ बसोस् अथवा भाग्य सुतस्थानमा ॥
मोतीवाहन छत्र माणिकसहित हुनेछ नै त्यो नृप ।
नीचैमा जन्मे नि पाउंछ सबै भन्छन् ती गर्गादय ॥

**राहु उच्चमा हुँदाको फल**

उच्चैमा रहँदा राहु शूरवीर धनी लम्पट ।
यशस्वी सरदार भै त्यो शनिकै फल भोगदछ ॥
उच्चमा रहँदा सौरी जमिन्दार सुखी कृषक ।
चक्रवर्ती यशस्वी होस् धनवान् योग्य शाषक ॥

**अद्वितीय स्थानवलि ग्रह**

राशि सममा शशी शुक्र, विषममा अरु ग्रह ।
स्थानवलि हुने गर्छन्, सूर्यादि यो छ निश्चय ॥
यसमा नौवटै ग्रहहरू स्थानवलि छन् ।
त्रिकोणि, उच्च भाग्येश, भाग्योदय युवा हुंदा ॥
भाग्यको स्वामी मङ्गल त्रिकोणमा छ ।

उपर्युक्त कुण्डली 'ऐतिहासिक कुण्डली' नामक ग्रन्थबाट लिइएको हो । यस कुण्डलीको केही फल ३ किसिमले प्रस्तुत छ – १) भावेशहरू विभिन्न रहँदाको फल, २) मेषादि राशिमा ग्रहहरू रहँदाको फल, ३) विभिन्न भावमा ग्रहहरूको दृष्टिफल ।

यस कुण्डलीको अध्ययन गरी भविष्यवाणी गर्ने समय यो होइन । यो भूतकालमा परिणत भैसकेको छ । श्री ५ बडामहाराजाधिराजको जीवनी, इतिहास राम्रोसँग अध्ययन गर्नुभएका विद्वान् पाठकवर्गको निमित्त यस लेखमा उल्लिखित फलबाट श्री ५ को स्वभाव, निर्णय गर्ने क्षमता, कोष, खर्च, मानवीय र राजकीय गुणहरूको बारेमा विशेष खोज-अध्ययन, विवेचना र विश्लेषण गर्न सजिलो होला ।

यस कुण्डलीमा केही अनौठा विशेषताहरू छन् ।

१) नौवटै ग्रहहरू स्थानबली छन् । यस्तो ग्रहहरूको स्थिति कहीं पनि पाइँदैन ।
२) एक ग्रह लाभमा बसेको र अरु ६ ग्रहहरूको दृष्टि पनि त्यही लाभस्थानमा नै रहेको छ । यो पनि अनौठो मान्नुपर्दछ ।
३) केन्द्रमा एउटैमात्र पनि ग्रह छैन, ज्योतिष शास्त्रमा केन्द्रहीनदरिद्रता भन्ने गरिन्छ । तर यो कुण्डली ?

मकवानपुर विजय वि. सं. १८१९, काठमाडौं १८२५ र भक्तपुर विजय वि. सं. १८२६ बृहस्पतिको महादशामा भएको छ । अन्य विश्लेषण गर्ने अभिभारा पाठकवर्गमा राख्दै विदा !





# पृथ्वीनारायण शाहले नेपाल एकीकरणका सन्दर्भमा अपनाएका केही युद्धरणनीतिहरू

– दीपक न्यौपाने



पृथ्वीनारायण शाह नयाँ नेपालका निर्माता कसरी बन्न पुगे र उनको (Greater Nepal) विस्तृत नेपालको राजा हुने चाहना केबाट प्रेरित बन्यो भन्नेबारे यसै भनेर भन्न नसकिएता पनि तत्कालीन खण्डित नेपालको ऐतिहासिक रूपरेखाले केही सङ्केत भने दिएको छ ।

स्वभावैले पृथ्वीनारायण शाह बढी चञ्चले स्वभावको र अति संवेदनशीलका साथै महत्वाकांक्षी भएकाले शुरुका दिनहरू पृथ्वीनारायण शाहले विभिन्न नयाँ ठाउँको भ्रमण गरेर बिताए । त्यसै क्रममा आफ्ना नजिकका राज्यका साथै काठमाडौं खाल्डोको समेत कैयौंपटक भ्रमण गरे । उनले घुमेका अनेकौं बाईसी-चौबीसी राज्यमध्ये काठमाडौं खाल्डोले बढी प्रभाव पारेको थियो । त्यसैले पृथ्वीनारायण शाहको मस्तिष्कमा जहिले पनि एउटै प्रश्नले सताउन थाल्यो – काठमाडौंका जनताको रहनसहन, बस्तीविकास, उत्पादनमूलक जग्गा, मठमन्दिर तथा बन्दव्यापार । बिस्तारै उनलाई काठमाडौंको रहन–सहनले प्रभाव पार्न थाल्यो । त्यसताका काठमाडौं खाल्डोपछिको जनसंख्या र अनुशासित तथा शालीन जनता भनेको गोर्खाको थियो भन्ने कुरा पृथ्वीनारायण शाहको प्रत्येक युद्धरणनीति र राज्यविस्तारले प्रमाणित गरेको छ ।

युद्धको घोषणा गर्नु र युद्धमा होमिनु कुनै पनि ठूलो कुरा होइन । तर अनवरत वस्तुगत रूपमा आफ्नो लक्ष्यलाई केन्द्र बनाएर प्रत्येक असफलतालाई सफलताको बिन्दुमा परिणत गर्दै हिंड्नु योद्धाको विशाल विचार र वीरता हो । समकक्षी राजा-रजौटाहरू पनि त्यसताका निकै नाम कहलाएका र इष्ट इण्डिया कम्पनीको लडाईं-प्रकृया र तिनको प्रभावबाट थोरबहुत प्रभावित र सशङ्कित थिए । पश्चिमी सेन राजा, काठमाडौंका मल्ल राजाहरू र विभिन्न अन्य राज्यहरूका राजा-रजौटाहरू आन्तरिक राज्यव्यवस्थामा निपूण थिए । यिनीहरूमाथि कब्जा जमाउनु भनेको गोरखा राज्यको लागि त्यति सजिलो थिएन । यसको लागि पृथ्वीनारायण शाहको पहिलो (Pillar) स्तम्भ भनेको सैनिक थियो, जुन अत्यधिक रूपमा राजा र देशप्रति वफादार थिए र जसबाट राज्यविस्तारमा पृथ्वीनारायण शाहले पूर्ण सहयोग प्राप्त गर्न सके । दोस्रो रणनीति, जितेका राज्यका राजा-रजौटा तथा कारिन्दालाई विस्तारित गोरखाको राज्यव्यवस्थामा समावेश गरी राज्यसञ्चालनमा तिनीहरूलाई समेत सहभागी बनाई पहाडी तथा केही तराई राज्यको विलय गोरखा राज्यमा गरेका थिए ।

पृथ्वीनारायण शाहलाई राज्यविस्तार गर्नमा प्रमुख भूमिका प्रदान गर्ने निर्णायक वस्तु नेपालको रीतिरिवाज र परम्पराअनुसार जग्गामाथिको स्वामित्व र सामाजिक मर्यादा नै हो भन्ने कुरा इतिहासविद् र समाजशास्त्रीहरू भन्ने गर्छन् । यथार्थमा यो भनाइ नेपालमा मात्रै लागु हुँदैन, यो संसारभरिका शासकहरूमा रहने साधारण पद्धति हो । जेजस्तो भएता पनि राज्यसञ्चालन गर्ने क्रममा पृथ्वीनारायण शाहले केही उच्चतम नीतिगत कार्यक्रम तय गरेर एक ठाउँमा समाहित भएका राज्यलाई छुट्न नदिने बलियो नीति लिएको पाइन्छ ।

'जग्गामाथि रैतीको अधिकार' पृथ्वीनारायण शाहको यो कार्यक्रमले जनतामाथि ठूलो प्रभाव पारेको थियो । साधारण कृषि पैदावारमा जीवन धान्ने परम्परा र न्यून प्रविधिको विकासले किसानहरूमा कुनै खास ठूलो महत्वाकांक्षा थिएन । तर पूर्व-पश्चिम फैलिएका डाँडाहरू रूख-जङ्गलले घेरेका र न्यून जनसंख्या-चाप परेको अवस्थामा जनतालाई जीवन धान्ने प्रशस्त अवसरहरू उपलब्ध थिए । गोरखाको आफ्नै सुन्दर पहिचान रहेको र रैतीहरूसमेत उच्च मनोबल तथा समयसापेक्षमा अरु राज्यका भन्दा बढी शिक्षित तथा विद्वान् रहेकाले पृथ्वीनारायण शाहको प्रत्येक प्रयासको विश्लेषण यथार्थरूपमा हुने र रणनीति अत्यधिक सफल रहेकोले राज्यसञ्चालनप्रकृया र राज्यविस्तारप्रकृया एकसाथ अगाडि बढाउन सफल रहेको पाइन्छ ।

अरु सानातिना राज्यभन्दा काठमाडौं खाल्डो अत्यधिक बलियो र विकास भएको थियो । यसको व्यापार उत्तरको तिब्बतदेखि दक्षिणको भारतीय प्रान्तसम्म फैलिएको थियो । त्यसैले काठमाडौं राज्यमाथि अधिकार जमाउनु भनेको सजिलो थिएन । काठमाडौंभित्र छिर्नुअघि यसको शक्तिको उचित सिंहावलोकन गरी शक्तिसन्तुलन गर्दै लडाइँ गर्नुपर्ने यथार्थ थियो ।

त्यसैले पृथ्वीनारायण शाहले पहिले काठमाडौंका शक्तिकेन्द्रहरू भत्काउने प्रयास गरे । काठमाडौंलाई कमजोर बनाउनको लागि यसको तिब्बतसँगको व्यापार पूर्णरूपले बन्द गराउनुपर्ने पहिलो आवश्यकता महसुस गरेर उनले काठमाडौं जोड्ने सबै नाका पहिले कब्जामा लिने योजना बनाए । यसरी तिब्बती बन्दव्यापार काठमाडौंबाट छुटाएर आफ्नो हातमा ल्याउन उनलाई पूरा दश वर्षको समय (सन् १७४४ देखि १७५४) लाग्यो । यो समयावधिमा उनले काठमाडौंसँगै जोडिएका सीमा जोडिने राज्यमाथि कब्जा जमाए र काठमाडौं खाल्डोलाई दोस्रो चरणमा धावा बोल्न बाँकी राखे ।

तिब्बत व्यापार बन्द भएपछि विस्तारै शहरीकरणतिर उन्मुख काठमाडौं, भक्तपुर तथा पाटन राज्यहरूको आम्दानीमा ठूलो प्रभाव पर्न थाल्यो । पूँजीको माग बढ्दै गयो, यसको पूर्ति हुन सकेन र केही वर्षभित्रै यी तीनवटै राज्यमा भारी आर्थिक मन्दी आयो । जनतामा समेत वितृष्णा देखिन थाल्यो र आफ्नो राज्यप्रतिको वफादारिता विस्तारै हराउँदै गएकोले तत्कालीन मल्ल राजाप्रतिभन्दा जनता विस्तारै पृथ्वीनारायण शाहको कदमप्रति सहयोगी बन्दै गए ।

यी सबै विकासक्रमको बारेमा तत्कालीन मल्ल राजाहरूलाई ज्ञान नभएको होइन तर राज्यव्यवस्थापन राम्रोसँग गर्न नसक्नु र जनतामाथिको आफ्नो दायित्व महसुस नगर्नु साथै मोजमस्तीमा दिन बिताउनुजस्ता कृयाकलापले उनीहरूलाई कमजोर बनाउँदै लग्यो ।



साधन, स्रोत तथा सैनिकको कारणले गोरखाभन्दा कैयौं गुणा बलियो काठमाडौं खाल्डोका राज्यहरू आफ्नै आन्तरिक कारण र पृथ्वीनारायण शाहको कुटिल राजनीति तथा युद्धरणनीतिको कारणले कमजोर बन्दै गए । यति गर्दा पनि काठमाडौं उपत्यकामाथि विजय हासिल गर्नु अझै चुनौतिपूर्ण नै भएको महसुस त्यसताकाका सल्लाहकारहरूले गरिरहेको तथा एकपटक शक्तिको परीक्षण गर्ने हेतुले सन् १९५७ मा कीर्तिपुरमाथि युद्ध गर्ने प्रयास गरियो । यो अति प्रत्युत्पादक रह्यो । यो युद्धमा सैनिक कमाण्डर कालु पाण्डेलाई गुमाउनुपरेपछि गोर्खा राज्यमा ठूलो भूकम्प गयो । नयाँ कार्यक्रम र नयाँ सैनिक दस्ता तथा रणनीति आवश्यक भएकाले पृथ्वीनारायण शाहले युद्धकार्यक्रममा परिवर्तन गरेका थिए ।

उत्तरतिरका सबै नाका बन्द भए पनि दक्षिणतर्फ खुला भएकोले यसलाई समेत कब्जामा लिनुपर्ने महसुस गरेर सन् १७६२ मा मकवानपुरसमेत गोर्खा फौजले कब्जामा लियो । यसपछि अब काठमाडौं हमला गर्दा पूर्णरूपमा गृहकार्य गरेर जानुपर्ने सल्लाहकारहरूको सल्लाहबमोजिम पृथ्वीनारायण शाहले कीर्तिपुरमा करीब दश वर्षपछि सन् १७६६ मा हमला गरेर कीर्तिपुर कब्जा गरे । कीर्तिपुरमाथि गोर्खाले कब्जा जमाइसकेपछि काठमाडौं र पाटनमाथि मनोवैज्ञानिक दबाब पर्न गयो । f

बिस्तारै यी राज्यहरूले हरेस खाँदै गए र साधारण सङ्घर्षबाट सन् १७६८ मा काठमाडौं गोर्खाको हातमा आयो र पाटनले काठमाडौंको हारपछि केही हप्तापछि नै आत्मसमर्पण गऱ्यो र सन् १७६९ मा गोर्खाले भक्तपुर कब्जामा लियो । यसरी पृथ्वीनारायण शाहले विशाल नेपालको निर्माणमा ठूलो फड्को मारे । त्यसपछि गोर्खा राज्यले 'नेपाल' राज्यमा आफ्नो नाम परिवर्तन गऱ्यो । यसर्थ विशाल राज्यनिर्माण हुने प्रकृया माथि बढिरह्यो ।

पृथ्वीनारायण शाहको राज्यनिर्माण गर्ने ठूलो महायज्ञमा निम्न ४ वटा प्रशासनिक सिद्धान्तहरू अपनाएको पाइन्छ –

१. राजाले जागिर दिने र जागिर खोस्ने अधिकार प्रत्यक्ष रूपमा आफैंले राखेका थिए ।
२. प्रत्येक जागिरको अवसर पारदर्शी रूपमा योग्यताको आधारमा तय गरिन्थ्यो ।
३. पूरै राज्यप्रशासन सैनिकद्वारा सञ्चालित थियो ।
४. कर्मचारीहरूलाई पूरै उत्तरदायी बनाइएको थियो । उनीहरूलाई कार्यसम्पादन गर्न नीतिनिर्माण गरिएको थियो । नीतिबमोजिम काम गरेको-नगरेको मूल्याङ्कन गरिन्थ्यो । यदि सन्तोषप्रद काम गरेको नपाइएमा तुरुन्तै जागिरबाट हटाइन्थ्यो । घुस खाने र ख्वाउने परम्परालाई राज्य-अपराधको रूपमा लिइएको थियो ।

विशाल नेपालका निर्माता श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको कुशल प्रशासनिक शैली वर्तमान परिप्रेक्ष्यमा पनि त्यत्तिकै महत्वपूर्ण रहेको छ ।

✡

# गोरखा जिल्लाको भौगोलिक तथा पर्यटकीय पृष्ठभूमि

**– देवकुमारी गुरूङ**






**१. परिचय :**

अठारौं शताब्दीको प्रारम्भसम्म 'नेपालको नाममा भौगोलिक अभिव्यक्ति' मात्र हुन गएको (वैद्य र मित्र, २०५४ पेज ३) आधुनिक नेपाली इतिहासको स्रष्टा गोरखा जिल्ला वीर गोरखालीहरूको गरिमा गहिरो र महत्ता विशिष्ट छ । राष्ट्रिय एवं अन्तर्राष्ट्रिय अभिलेखहरूमा गोरखाले महत्वपूर्ण स्थान पाएको छ ।

द्रव्य शाहबाट स्थापित प्राचीन गोरखा जिल्ला आर्थिक दृष्टिले कमजोर, त्यसवेलाका अन्य राज्यहरूभन्दा सानो र कान्छो, कम जनसंख्या भएता पनि आधुनिक नेपालको एकीकरणको कार्यमा 'शुरु भूमिका' खेल्ने तत्कालीन शक्तिशाली प्रान्त र हालका पश्चिमाञ्चल विकास क्षेत्रका जिल्लाहरूमध्ये बहुपक्षीय महत्वपूर्ण जिल्ला मानिन्छ ।

शाह वंशका चौथा राजा राम शाहले राज्यको आर्थिक, सामाजिक एवं न्यायिक परिपाटीको प्रारम्भ गरेदेखि नै नेपालीहरूले भन्दै आएका छन् – 'न्याय नपाए गोरखा जानू ।' वास्तवमा गोरखा न्यायकै मन्दिरको रूपमा मानिन थाल्यो र यो गोरखाकै शाहवंशका दशौं राजा पृथ्वीनारायण शाहले पूर्व र पश्चिममा टुक्रिएर रहेका बाईसे-चौबीसे राज्यहरूलाई एउटै राज्यमा सम्मिलित गराउँदै नेपाल र नेपालीको अस्तित्व कायम गरे र वास्तवमा गोरखा विशाल अधिराज्यको सृजनाको स्रोत भएको छ । (नेपाल परिचय भाग – ३, २०३१ पृ. – ५७, श्री ५ को सरकार)

ऐतिहासिक दृष्टिकोणबाट गोरखाको नाउँ रहेको छ । खासगरी योगी गोरखनाथको नाउँबाट भएको देखिन्छ । एघारौं शताब्दीसम्म काठमाडौं उपत्यकाका शासकहरूका अधिनमा गुल्मी र लमजुङ भएका हुँदा गोरखा पनि काठमाडौं उपत्यकाकै अधिनमा रहेको देखिन्छ (वैद्य र वज्राचार्य, २०२८, पृष्ठ ११–१४) ।




*Foundation of Gorkha*

राम शाहको समयभन्दा अगाडि सानो ग्रामीण प्रान्तमा स्थापित गोरखा एक ठूलो गोरखाराज्यको रूपमा विस्तार हुन राम शाहको 'भूमिविस्तार' को कुशल कार्यको प्रतिफल थियो । "राम शाहले आफ्नो समयमा गोरखा प्रान्तको धरातलीय सिमाना उत्तरमा रसुवापास, पूर्वमा धादिङ, पश्चिममा लमजुङ र दक्षिणमा मर्स्याङ्दीसम्म विस्तार गरेका थिए र पाटनसँग सम्बन्ध राखेर काठमाडौं उपत्यकाको भविष्यको सक्रिय राजनीतिक भूमिका खेल्ने भावना राखेका थिए । त्यसैले राज्यविस्तार गर्ने क्रममा राम शाहलाई पृथ्वीनारायण शाहको अगुवाइ (Precusor) हो भन्न उचित ठान्दछन् ।" (वैद्य, पृष्ठ – ८४)

पृथ्वीनारायण शाहलाई भूगोल, इतिहास, नीतिशास्त्र र कौटिल्यको अर्थशास्त्रको राम्रो अध्ययन थियो (उपाध्याय श्रीराम – २०५४, पौष २७) । यस्तै गरी "नेपालको भौगोलिक क्षेत्रलाई पनि बडो तार्किक रूपमा प्रस्तुत गरेका छन् – जस्तै : नेपाललाई 'यो राजे दुई ढुङ्गाको तरूलजस्तो रहेछ' भन्ने हुकुम बक्सी नेपाल राज्यलाई सुरक्षा गर्नु 'आफैं निहुँ खोजेर लडाइँ नगर्नू तर आइलाग्नेमाथि जाइलाग्न पछि नपर्नू (जाई कटक नगर्नू भिकी कटक गर्नू) भन्नेजस्ता उपदेशले नेपाली वीरहरूमा एउटा चेतनाको दियो बालिदिएका छन् भने देशभक्तिको पाठ दिएका छन्, साथै भौगोलिक अध्ययनको महत्त्व दर्शाएका छन् । त्यसैले नवनेपाल गोरखा जिल्लाको भौगोलिक विविधता केलाउनु उत्तिकै उपयोगी देखिन्छ ।

**२. भौगोलिक पृष्ठभूमि :**

**२ क. भौगोलिक स्थिति :**

गोरखा जिल्ला नेपालको पश्चिमाञ्चल विकास क्षेत्रको गण्डकी अञ्चलअन्तर्गत पर्दछ । यो जिल्ला २७°४८' उत्तर देखि २८°४५' उत्तरी अक्षांश र ८४°२७' पूर्वदेखि ८४°५८' पूर्वी देशान्तरमा अवस्थित छ । समुद्री सतहदेखि करीब ५०० मिटर दक्षिणदेखि ७००० मि. उत्तरसम्मको उचाइमा उत्तर-दक्षिण भएर फैलिएको छ । (डिष्ट्रक कन्टोर म्याप अब गोरखा – क र ख – नापी विभाग – २०४३)

पूर्वमा धादिङ र तिब्बत (चीन), पश्चिममा तनहुँ, लम्जुङ र मनाङ्ग जिल्लाहरू, उत्तरमा तिब्बत (चीन) र दक्षिणमा चितवन, तनहुँ र धादिङ्ग जिल्लाहरूले यस जिल्लालाई सीमाङ्कन गरिएको छ । ६६ वटा गाउँ विकास समिति, एक नगरपालिका र ३ वटा चुनाव क्षेत्र भएको यस जिल्लाको कूल क्षेत्रफल ३६१० वर्ग कि. मि. हुन आउँछ (शर्मा हरिभक्त – १९९७, पृष्ठ ३८५) । यो जिल्ला काठमाडौंदेखि १४० कि. मि. को दूरीमा रहेको छ ।

**२ ख. धरातलीय स्वरूप :**

महाभारत श्रृङ्खलाको उत्तरी भू-भागबाट उठेर मनकामना, गोरखनाथ र लार्के भोट (भञ्ज्याङ) हुँदै ग्याला भञ्ज्याङसम्म फैलिएको गोरखा जिल्लाको धरातलीय स्वरूप लेक, बेंसी र हिमाली पर्वतहरूले बनेको छ । जिल्लाको पश्चिमोत्तर भेकमा मनास्लु हिमालय श्रेणी र पूर्वोत्तर भेकमा तथा चर्के र श्रृङ्गी हिमालय श्रेणीहरू गोरखा दरबारबाट देख्न सकिन्छ । चेपे नदीको शिरमा बौद्ध हिमाल उठेको छ भने चुलिङ्गको भीरमा (उ. पश्चिम) हिमालचुली रहेको छ ।



ग्याला र लार्के भञ्ज्याङदेखि अनन्त हिमनदीहरूबाट पानी लिइ बगेको बूढीगण्डकी स्यार खोलाको दोभानबाट गोरखाको पूर्वी सिमाना छुट्याउँछ । मनाङ र भोट काटेर लमजुङ हुँदै झरेको मर्स्याङ्दी चेपे नदीको सङ्गममा पुगेर गोरखालाई छुन थाल्दछ ।

यस जिल्लाको एक तिहाइ भाग अति उत्तरी दुर्गम क्षेत्रअन्तर्गत पर्दछ जहाँ सधैं हिउँ पर्दछ भने दक्षिणी खोचमा गर्मी हुन्छ । दक्षिणी भागका तुलनामा उत्तरी भागका धरातलीय स्वरूप भिराला र उच्च छन् ।

भौगोलिक बनावटको आधारमा गोरखा जिल्लालाई निम्न भागमा विभाजित गरिएको छ –

**२ ख १. हिमाली प्रदेश**

जिल्लाको उत्तर खण्डको करीब ५००० मिटरदेखि ८००० मिटरसम्मको अग्लो भाग हिमाली प्रदेशभित्र पर्दछ जहाँ बाह्रै महिना हिउँ पर्दछ । यस प्रदेशमा क्रमशः मनास्लु, हिमालचुली, श्रृङ्गी हिमाल र बौद्ध हिमाल पर्दछन् । लार्के र ग्याला भञ्ज्याङ दूधपोखरी र नारदकुण्ड यसै प्रदेशभित्र पर्दछ ।

**२ ख २. लेकाली तथा भोट प्रदेश :**

हिमाली प्रदेशभित्रैका २५०० मिटरभन्दा माथिका क्षेत्रलाई लेकाली प्रदेश भनिन्छ । यहाँ असोज–कार्तिकदेखि हिउँ पर्ने र चैत्र-वैशाखमा हिउँ पग्लने गर्दछ । यसरी बढी मात्रामा हिउँ पर्ने भएकाले भोट प्रदेशका मानिसहरू अस्थायी रूपमा पशुपालन गर्ने र वर्षा याममा लगाएका बालीनाली उठाएर हिउँदमा जिल्लाको दक्षिणी बेंसीतिर झर्दछन् । त्यसैले यस प्रदेशमा बस्ती कम र वर्षे बस्तीमात्र हुन्छ । यस प्रदेशमा केही हिमाली झारपात र वनस्पति पाइन्छन् ।

**२ ख ३. पहाडी प्रदेश (९०० मि. – २५०० मिटर)**

९०० मिटरदेखि २५०० मिटरसम्मको भागमा पर्ने डाँडाकाँडा तथा भञ्ज्याङ्ग र बस्तीहरू यसअन्तर्गत पर्दछन् । कोणधारी जङ्गल प्रशस्तमात्रामा पाइन्छन् । जिल्लाको अधिकांश बस्ती यसै प्रदेशमा पर्दछ र यहाँको हावापानी स्वस्थकर छ । धार्चेको पहाड, सिरानचोक, भच्चेक, सुलीकोट, उपल्लोकोट आदि गाउँहरू यसै प्रदेशमा पर्दछन् ।

**२ ख ४. बेंसी तथा टारहरू (१२२० मिटरभन्दा मुनि)**

बूढीगण्डकी, दरौंदी, चेपे, मर्स्याङ्दी तथा दक्षिणपट्टिको त्रिशूलीको तीरमा पर्ने समथर भूमि र पालुङ्गटार, पोखरीटार, घ्यालचोकटार साथै अन्य सानातिना टारहरू यस प्रदेशमा पर्दछन् । यस प्रदेशमा टार बेंसी र फाँटहरूलगायत धार्मिक र ऐतिहासिक दृष्टिले महत्त्वपूर्ण ठाउँहरू, जस्तै – गोरखकाली, मनकामना मन्दिर, आँपपिपल, खलाञ्चोक तथा पहाडी प्रदेशका होचो भागमा पर्ने बस्तीहरू पर्दछ ।

जिल्लाको अत्यधिक खाद्यान्न उत्पादन हुने क्षेत्र पनि यही हो । यो क्षेत्रमा उष्ण तथा अर्धउष्ण जलवायु पाइने हुँदा यहाँ धान खेती राम्रो हुन्छ । यहाँ उखु, सुर्ति, फलफूलजस्ता नगदे बालीका साथै सिंचाई नपुगेका टारहरूमा प्रशस्त मात्रामा पाखे बालीहरू, जस्तै : मकै, कोदो, भटमास, आलु तथा घैयाखेती राम्रो हुन्छ ।

धरातलीय विविधताअनुसार नै हावापानी, वनस्पति, बालीहरू, मानिस, मानववस्ती र पेशामा पनि विभिन्नताको संयुक्त रूप हो गोरखा । धरातलीय विभिन्नताले गर्दा नै जमिनको उपयोगमा पनि एकरूपता पाइदैन, जस्तै : खेतीयोग्य भूमि १९%, जङ्गल ५३% र घाँसे भूमि २८% पर्न आउँछ। (देवकोटा – १९९८ पृष्ठ – २५)

## २ ग. नदी (Drainage)

### २ ग १. बूढीगण्डकी नदी :

मध्यनेपालका दुई मुख्य नदी बूढीगण्डकी र मर्स्याङ्दीको बीचमा अवस्थित गोरखा जिल्लामा चेपे र दरौंदीलगायत अरु कैयन् खोलाहरू अविरल रूपमा बगिरहेका छन्।

बूढीगण्डकी करीब ७००० मिटर उचाइमा रहेको लार्के र ग्याला हिमभञ्ज्याङबाट उत्पन्न भई उत्तर-पश्चिमबाट मनास्लु र हिमालचुलीबाट बग्ने अटुट हिमखोला तथा श्रृङ्गी हिमालको पश्चिमी भेकमा बग्ने खोलाहरूको पानी बोकेर दक्षिण-पूर्वमा लाग्दछ र स्यार खोलामा मिसिन्छ। त्यसपछि गोरखा जिल्लाको दक्षिण भाग भई आरूटार हुँदै बेनीघाट पुगी त्रिशूलीमा मिसिन्छ । यो नदीको मुहानदेखि वेनीघाटसम्म धेरै सहायक नदीहरू मिल्न आउँछन् (बूढीगण्डकीका सहायक नदीहरू, कन्टोर म्याप अब गोरखा डिष्ट्रिक – २०४३)

### स्यार खोला

यो बूढीगण्डकीको मुख्य सहायक नदी हो। यो खोला उत्तरपूर्व कुनाबाट उत्पत्ति भई द. पश्चिममा बग्दछ र न्याकको नजिकैको भागमा बग्ने बूढीगण्डकीमा मिसिन्छ।

अन्य सहायक नदीहरूमा क्रमशः चुलिङ्ग खोला, माछा खोला, नावुङ खोला र पाङगोर खोला, बूढीगण्डकीको पश्चिम भागबाट आउने सहायक नदीहरू हुन्।

त्यस्तैगरी पूर्वी भागबाट सहायक नदीको रूपमा मिसिने खोलाहरूमा क्रमशः थारू खोला, दोभान खोला र रिचेट खोला पर्दछन्।

बूढीगण्डकी नदी हिमनदीबाट उत्पत्ति भएको हुनाले यस नदीमा स्थायीरूपमा पानी भइरहन्छ जसको आसपासमा रहेका टार र स-साना फाँटहरूमात्र होइन, हरिया पाखा र रसिला वेंसीहरूले प्राकृतिक सौन्दर्य वढाएको छ यस बूढीगण्डकीले।

यो बूढीगण्डकी साधारण नदीमात्र नभएर गोरखाको प्राकृतिक ढल तथा आरूघाटबाट प्रारम्भ भई लार्के भोट जाने मूल बाटोको रूपमा आधार पनि हो।

### २ ग २. दरौंदी खोला :

यो खोला रूपीनाला भञ्ज्यांङबाट उत्पत्ति भई बौद्ध हिमाल, रूपीनाला र नारदकुण्डको जलस्रोत सङ्कलन गरी गोरखा जिल्लाको बीचैबीच उत्तरबाट दक्षिणतिर बगेको छ र मझुवा खैरेनीमा पुगेपछि मर्स्याङ्दीमा मिलेको छ । यसका शाखाहरूमध्ये लाङ्दी, चुदी, मुसुण्डा, खार र शम्भु खोलाहरू पश्चिमी भागबाट मिसिन आएका छन् भने जराङ्ग, राधिङ्ग (राङ्गरूङ्ग), मसेल, सीर्द, हाँडी र लुदी खोलाहरू पूर्वी भागबाट मिसिन आएका छन्। यी पूर्वी भागबाट आएका खोलाहरू दक्षिणी भागमा गएर मर्स्याङ्दी नदीमा मिसिन्छ। यो नदी अविरल रूपमा बगे पनि वर्षातको समयमा बढी सक्रिय हुन्छ, जसले गर्दा मसेल, दोभानदेखि कुन्दुरछाप गाउँसम्म १३ किलोमिटर अथवा चार कोशको भागमा दरौंदी निकै



फैली धानखेतहरू नष्ट पारिदिन्छ भने यसको आसपासमा पर्ने विभिन्न टार र समथर भूमि यसै नदीबाट सिंचिएको छ।

गोरखा जिल्लाको मुख्य नदी-उपत्यका पनि यिनै बूढीगण्डकी र दरौंदी नदी-उपत्यका नै हुन्, जुन उपत्यकाले अधिकतम उत्पादन र प्राकृतिक सुन्दरता दिएको छ।

### २ ग ३ चेपे नदी :

बौद्ध हिमालबाट उत्पति भई दूधपोखरीको निकाससमेत समावेश गरी गोरखा जिल्लाको पश्चिमी सिमाना बौद्ध हिमालदेखि रागिनासटारको पुच्छारमा पुग्दछ र मर्स्याङ्दीमा मिसिन्छ। मिदीखोला, साँहीखोला, खारखोला र कदलीखोला गोरखाबाट बगेका चेपेका सहायक खोला हुन् भने लाङ्दी, कुएले खोलो, चिल्ली खोलो र बोराङ खोलो लमजुङबाट बगेका चेपेका सहायक खोला हुन्। मल्लाटार, च्याङ्लीटारजस्ता टारहरूमा चेपेबाट सिंचाई गर्न सकिन्छ । चिल्ली' खोलाको दोभानबाट निर्माण गरिएको नहरले लमजुङका साहिंलीबाट अल्काटार, तीनपिप्ले र गरमबेसी (टार) आदिमा सिंचाई सुविधा पुगिसकेको छ।

### २ ग ४. मर्स्याङ्दी नदी :

गोरखा जिल्लाको दक्षिण-पश्चिमपट्टिका सिमानामा मर्स्याङ्दी बगेको छ । यसले अञ्चल र जिल्ला दुवै प्रकारको सिमानाको काम गरेको छ। यो नदी दामोदर, अन्नपूर्ण, पेरी र लेगुला हिमालयतिरका हिमखोलाहरूबाट शुरु भई गोरखाको उत्तर-पश्चिमको छिमेकी जिल्ला मनाङ्गमा बग्दछ। त्यसपछि मनाङ्गबाट दक्षिण बगेको मर्स्याङ्दीमा लार्के हिमाल, हिमालचुली र मनास्लु हिमालतिरबाट झरेका खोलाहरू मिसिन्छन् । यसका साथसाथै लमजुङ्ग हुँदै तार्कुघाटका केही तल रागिनासको छेउ पुगेपछि सहायक नदी चेपे भेट्दछ। चेपेको दोभानदेखि पालुङ्गटारको पश्चिमी किनारा हुँदै बगेको यो नदीले फाउंदी, चुदी र दरौंदीको पानीलाई समेत लिई मुङ्लीन नजीक पुगेपछि त्रिशूलीगण्डकीमा मिसिन्छ। यिनै मर्स्याङ्दी नदी हाल नेपालको विद्युतीय जलस्रोत भएको छ।

## २ घ. ताल / पोखरी र यसका महत्व :

### अ) कालुछुमा ताल :

समुद्री सतहदेखि करीब ५०० मिटर अग्लो भूभाग गोरखा जिल्लाको उत्तरी सिमानामा जोडिएको प्रोक गा. वि. स. को दक्षिणी सिमानामा अवस्थित छ। यो ताल १०५ किलोमिटर (आधा कोश) लम्बाइमा पूर्व-पश्चिम भई फैलिएको छ । (शर्मा चन्द्र – २०३०, पृष्ठ २०)

### आ) ठूलो दूधपोखरी :

गोरखा जिल्लाको मध्यभाग उहिया गा. वि. स. मा अवस्थित छ । जनैपूर्णिमाको दिन मेला लाग्ने भएकोले धार्मिक दृष्टिले महत्वपूर्ण मानिन्छ।

**इ) सानो दूधपोखरी :**

गोरखा जिल्लाको करीब दक्षिण-पश्चिम भागमा पर्ने खरीबोट गा. वि. स. र बौद्ध हिमालको फेदीमा अवस्थित छ। यसमा पनि जनैपूर्णिमाकै दिनमा मेला लाग्ने भएकोले धार्मिक दृष्टिकोणले महत्वपूर्ण मानिन्छ।

**ई) नारदकुण्ड :**

यो गोरखाको उत्तरी भाग दरौंदी नदीको मुहानमा अवस्थित यो कुण्ड पनि जनैपूर्णिमाकै वेला रमाइलो मेला लाग्ने भएकोले धार्मिक दृष्टिकोणबाट प्रसिद्ध छ।

**उ) तातोपानी :**

उदिया गा. वि. स. को पूर्वपट्टि छेउमा स्थित बूढीगण्डकीमा गई यो मिसिन्छ।

**ऊ) भुलभुले खार :**

गोरखा जिल्लाको दक्षिण-पश्चिमी भागमा पर्ने खांप्लाङ्ग गा. वि. स. मा पर्दछ र यसको पानी तातोमात्र नभई पूरै बीरेनूनजस्तो वास्ना आउँछ र खारखोलामा मिसिन्छ।

यी विभिन्न महत्त्व बोकेका तालहरूले गर्दा उक्त ठाउँहरूमा आन्तरिक पर्यटनको विकासको सम्भाव्य बढी देखिन्छ।

**२ ङ. हावापानी :**

गोरखा जिल्ला सामान्यतः दक्षिण-पश्चिमी मनसुनी हावाको प्रभाव परेको छ। जुन महिनामा (जेठ) वर्ष शुरु भएर सेप्टेम्वर (असोजमा) टुङ्गिन्छ भने नोभेम्बर र डिसेम्वरको करीब दुई महिना वर्षा नै नहुने कुरा इ. सं. १९७० मा गोरखाको करीब ११०० मिटर अग्लो भूभागबाट रेकर्ड गरेको मौसम अवलोकन केन्द्रको अभिलेखबाट प्रष्ट हुन्छ। (नेपाल पश्चिम भाग – ३, २०३१, पृष्ठ ६३ – ६४)

"यस जिल्लाको औषत वार्षिक तापक्रम अधिकतम २५$^{o}$ सेल्सियस र न्यूनतम १४$^{o}$ सेल्सियस हुन्छ। यस्तै वार्षिक औषत वर्षा १४९.५ मिलिलिटर हुन्छ।" (शर्मा हरिभक्त, सम्पादक १९९७, पृष्ठ ३८५)

गोरखा जिल्लामा विभिन्न स्थानको उचाइमा फरक परेको कारणबाट तापक्रम र वर्षामा फरक पाएजस्तै यी हावापानीबाट प्रभावित क्षेत्रहरूमा बेग्लाबेग्लै खालको हावापानी पाइनु स्वाभाविकै हो। गोरखाको हावापानीलाई निम्न भागमा विभाजन गर्न सकिन्छ –

१) उष्ण हावापानी (Tropical Climate)
२) अर्ध उष्ण (Sub Tropical) न्यानो शीतोष्ण हावापानी
३) शीतोष्ण हावापानी (Cool Temperate Climate)
४) हिमाली / लेकाली हावापानी (Alpine Climate)

**२ च. वनस्पति :**



पहाडी जिल्ला भए पनि विभिन्न प्रकारको जडिबुटी र वृक्षरेखाको आसपासमा भैरूङ्गपाती, सुनपाती र स-साना धुपीका बोटहरू पाइन्छन् जो पूजाआजाका लागि बास्नादार धुपको रूपमा प्रयोग हुन्छ।

बृक्षारेखाभन्दा माथि (४००० मि. भन्दा माथि) को भेकमा र वृक्षरेखाको आसपासमा नीरमसी, जटामसी, पाँचऔंले, कुडकी, पदमचाल, अल्लो, सेतो विष, नीलो विष, यार्सागुम्बाजस्ता जडिबुटीहरू पाइन्छन्, जो वैज्ञानिक अनुसन्धानको लागि महत्वपूर्ण देखिन्छन्।

२,१३४ मिटरदेखि वृक्षारेखाको बीचमा कोणधारी पाइन्छ जहाँ प्रशस्त मात्रामा निगालोधारी पाइन्छ। त्यसैले गोरखा जिल्लामा निगालो उद्योग पनि स्थापना गरिएको छ।

जिल्लाको मध्यभागमा पनि नागबेली, टिमुरे, दालचिनी, धतुरो, असुरो, रुद्राक्ष, अमला, हर्रो आदि जडिबुटी पाइन्छ।

जिल्लाको समथर भूमिमा मिश्रित तथा पतझड वनस्पति पाइन्छ र यस भेकका मुख्य वृक्षहरूमा साल, सिमल, खयर, चिलौने, कटुस, आँप तथा वरपीपल हुन् र यिनै वनस्पतिबाट निर्माण सामग्री तथा इन्धनश्रोत पूर्ति गर्दछन्।

**३. जनसंख्या**

| जनसंख्याको किसिम / वर्ष | १९८१ | १९९१ | १९९६ अनुमानित | वार्षिक वृद्धिदर |
|---|---|---|---|---|
| कूल जनसंख्या | २३१२६४ | २५२५२४ | २७२७८८ | ०.८० |
| पुरुष | ११४६१४ (४९.५%) | १२१३२७ (४८%) | १२६२५८ (४८.००%) | |
| महिला | ११६६५० (५०.५%) | १३११९७ (५२.%) | १३६५३० (५२.००%) | |
| ६ वर्ष र त्यसभन्दा माथिको शैक्षिक वृद्धिदर | १८.३% | ४३.७% | ४५.४% | |
| जनघनत्व प्रति वर्ग कि. मि. | ६४.२१% | ७०.०% | ७३ % | |

श्रोत : सि. बि. एस. सेन्सस – १९९८

गोरखा जिल्लाको वार्षिक जनसंख्या वृद्धिदर ०.८० प्रतिशत देखिन्छ भने जनघनत्व प्रति वर्ग कि. मि. मा ७० जना पर्दछ र १९९६ को प्रोजेक्ट तथ्याङ्कलाई हेर्दा ७३ जना पुग्दछ। कूल जनसंख्यामध्ये गोरखा जिल्लामा महिलाको संख्या बढी देखिन्छ। शैक्षिक तथ्याङ्कलाई हेर्दा १९८१ देखि १९९१ बीचको वृद्धिदर दोब्बरभन्दा बढी वृद्धि भएको छ।

यहाँका मुख्य जातिहरूमा गुरूङ्ग, मगर, ब्राह्मण, क्षेत्री, नेवार, कामी, सार्की, दमाई, कुमाल, तामाङ, भोटे, मिया, चेपाङ्ग र दराई आदि पर्दछन् जसले गर्दा यस जिल्लामा विभिन्न धर्मावलम्बी र भाषिक समुदायहरू छन् भन्ने स्पष्ट हुन्छ।

धर्मको हिसाबमा हिन्दू, बुद्धिष्ट, इस्लाम, क्रिश्चियन, जैन र किरात धर्म मान्नेहरू बसोबास गर्दछन् । सबभन्दा बढी हिन्दू धर्मावलम्बी (२२६९३९) छन् भने सबभन्दा कम किरांती (२) छन् (सि. वि. एस. – १९९८) ।

### ४. शैक्षिक बिवरण

गोरखा जिल्लामा ४२१ वटा प्राथमिक, ८९ वटा निम्न माध्यमिक, ४८ वटा माध्यमिक स्कूलहरू छन् भने नेशनल रिसर्च एशोसिएसन नेपाल, १९९७ को सर्वेक्षणअनुसार स्कूलका प्रत्येक तहमा महिला विद्यार्थी संख्या प्राथमिक तहदेखि माध्यमिक तहसम्म क्रमशः घट्दै गएको देखिन्छ, जस्तै – क्रमशः ११%,२% र १% दरले र महिला शिक्षिकाले तालिमको अवसर पनि क्रमशः १०, २ र १% को दरले मात्र पाएका छन् ।

यसै सर्वेक्षणअनुसार त्रिभुवन विश्वविद्यालयसँग आबद्ध गोरखा क्याम्पस शिक्षा संकाय र द्रव्य शाह बहुमुखी क्याम्पस (व्यवस्थापन, मानविकी र कानून संकाय) गरी दुईवटा क्याम्पस छन् । यी क्याम्पसहरू ऐतिहासिक ठाउँ र व्यक्तित्वको आधारमा नामाकरण गरेको पाइन्छ । यी क्याम्पसहरूमा प्रवीणता प्रमाणपत्र तहमा कूल विद्यार्थी संख्यामा महिला विद्यार्थी सख्या आधाभन्दा कम छन् भने स्नातक तहमा पुगेपछि महिला विद्यार्थी संख्या ५% मात्र हुन्छ । यसबाट महिला शिक्षामा र जागरूकतामा जोड दिन अनुसन्धान र विकासको आवश्यकता पर्दछ ।

### ५. यातायातको बिकास

गोरखा जिल्लाको सदरमुकाम, पोखरीचोक र काठमाडौं जिल्लालाई करीब १४० किलोमिटर लामो पक्की सडकले जोडेको छ । पक्की सडक –

१) काठमाडौंदेखि आँबुखैरेनीसम्म पक्की राजमार्गले जाडेको छ ।

अबुखैरेनी – गोर्खा बजार पक्की सडक मुख्य राजमार्गबाट छुट्टिएको छ (२५ कि. मि.) ।

२) गोर्खा – आरूघाटसम्म २ कि. मि. खण्डसमेत (ग्राभेलड्ड) र ८ कि. मि. धुलो बाटोले जम्मा १० कि. मि. सडकले जोडिएको छ ।

३) गोर्खा सिटी रोड (२ कि.मि. खण्डसमेत र २ कि. मि. धुलो बाटो गरी जम्मा ४ कि. मि.)

४) गोर्खा – मनकामना ७ कि. मिटरको धुलो बाटो

५) ठूलो आँगर्न – सातपीपल ५ कि. मि. को धुलो बाटो ।

### ६. गोरखामा पर्यटन बिकास

नेपालमा पर्यटकीय श्रोतको बिबिधता भन्नाले प्राकृतिक, सांस्कृतिक र ऐतिहासिक स्वरूपहरूलाई जनाउँछ । "नेपालमा पर्यटन भन्नाले अज्ञात प्रदेश वा क्षेत्रका विभिन्न तहका सुन्दरताको सम्भाव्यताको जानकारी भन्ने जनाउँछ ।" (गुरूङ्ग हर्क , १९८५)

इ. सं. १९४५ देखि नै पर्वतारोहीहरूको लागि खुल्ला गरिएका नेपाली हिमालयहरू पर्वतारोही क्रियाकलापको लागि एउटा ठूलो नाचघरजस्तो भएको छ र तिनीहरूको सफल



र असफल नाटकले सलाईको काँटीजस्तो पर्वतलाई भेट्न मानिसहरूलाई जागरूक बनाएको छ ।

पर्यटन विकास र पर्वतारोही क्रियाकलापको विकासले हिमालय चुचुरा (पिक), ऐतिहासिक र सांस्कृतिक विषयमा जानकारीहरू खोजी गर्दछ, जुन कार्यले विश्वका यात्री, पर्वतारोही, अनुसन्धानकर्ता आदिलाई आकर्षित गर्दछ । यसै कुरालाई महत्व दिएर मोटकाले अन्तर्राष्ट्रिय पर्यटन विकासको साथै आन्तरिक पर्यटनको विकासमा जोड दिन भ्रमण वर्ष १९९८ को घोषणा गरे र यही घोषणाले स्थानीय प्रमुख स्थलहरूको भ्रमण महोत्सव गराए ।

विभिन्न पर्यटन केन्द्रहरूको बीचमा अवस्थित गोरखा जिल्ला भौगोलिक विविधता, सांस्कृतिक महत्व र ऐतिहासिक पृष्ठभूमिको कारणले पर्यटन विकास र विस्तारमा नेपालका अन्य जिल्लाहरूका तुलनामा महत्वपूर्ण हुन आउँछ ।

नेपाल अधिराज्यका उच्च हिमशिखरहरूमध्ये यस देशमा पर्ने मनास्लु हिमश्रृंखला पनि एक पर्दछ ।

पर्वतारोहीको इतिहास हेर्ने हो भने त्यति छोटो देखिदैन । इ. सं १९५५ मा बेलायतका नागरिकबाट हिउँचुली आरोहण गरी पर्यटनको इतिहासमा शुभारम्भ गरेको पाइन्छ । इ. सं. १९५८, १९५९ र १९६० मा जापानी नागरिकबाट हिउँचुली चढ्ने प्रयास गरे र इ. सं. १९६० मा जापानको केइ. ओ. विश्वविद्यालय पर्वतारोहणको दल यस शिखरमा पुग्न सफल भए भने इ. सं १९६० मा डच पर्वतारोहीहरू यस शिखरमा पुग्न सफल भए ।

नेपालमा १००० भन्दा बढी हिमालय चुचराहरू छन्, जसमध्ये ६००० मिटरभन्दा बढी उचाई भएका चुचुराहरूमध्ये पर्यटन उद्योग र पर्यटन विकासको निमित्त १४२ वटा चुचुराहरूलाई विभिन्न समयमा खुल्ला गरिसकेका छन् (मोटका – MOTCA – १९९६) ।

विश्वका १० वटा उच्च हिमशिखरहरूमध्ये ८ वटा शिखर (सगरमाथासहित – ८८४८ मिटर उचाई) नेपाल अधिराज्यमा पर्दछ । गोरखा जिल्लामा पर्ने मनास्लु शिखर विश्वको छैटौ उच्च शिखर मानिन्छ । यसलगायत ६००० मिटरभन्दा बढी उचाईका शिखरहरू पनि कम छैनन् । त्यसैले गोरखाको पर्वतीय पर्यटन विकास, पर्वतारोही र पर्वतसम्वन्धी अनुसन्धानकर्ताहरूका लागि चुनौतिको विषय भएको छ ।

गोरखा जिल्लामा पर्वतारोहीका लागि खुल्ला गरिएका हिमालय चुचुराहरू, उचाई र स्थिति यस्तो छ –

| सि.नं. | चुचुराको नाम | हिमालयको उचाइ | अक्षांश | देशान्तर |
|---|---|---|---|---|
| १ | मनासलु (मुख्य) | ८१६३ (मानसिरी) | २८ ३२'५८" | ८४ ३३ ४३ |
| २ | हिमालचुली पूर्व | ७८९३ ( " ) | २८ २६ ०८ | ८४ ३८ ३२ |
| ३ | म्याग्दी चुली | ७८७१ ( " ) | २८ ३० १३ | ८४ ३४ ०९ |
| ४ | हिमालचुली पश्चिम | ७५४० ( " ) | २८ २६ ०७ | ८० ३६ ०६ |
| ५ | हिमालचुली उत्तर | ७३७१ ( " ) | २८ २६ ५९ | ८४ ३६ २३ |

| | | | |
|---|---|---|---|
| ६ मनास्लु उत्तर | ७१५७ | २८ ३५ १४ | ८४ ३२ ४० |
| ७ बौद्ध | ६६७२ | २८ २२ ४३ | ८४ ४० ३८ |

**स्रोत श्री ५ को सरकार, मोटका १९९६, पृष्ठ ८–११**

उल्लिखित पर्वतारोहीका लागि सूचित गरिएका चुचुराहरूबाट नै गोरखा जिल्लाका अन्य हिमालहरूको दृश्य देख्न सकिन्छ । जस्तै उत्तरी क्षेत्रका सौला हिमाल (६२३५ मि ।) डेइजेन हिमाल (७२३५), लापाचौर चुचुरा (५९६०), पामा हिमाल (६३००), शृङ्गी हिमाल (७१८७ मि ), यागा चुचुरा (७११० उ पू ) आदि (समुच्च गोरखा जिल्ला म्याप – २०४३, क र ख, डिस्ट्री कन्थेर म्याप अब गोरखा – २०४३)

पर्यटन विकासको इतिहासमा गोरखा जिल्लाको इतिहास त्यति छोटो मानिदैन । पर्यटकहरूको संख्या प्रत्येक वर्ष समानुपातिक रूपमा नै आएको देखिन्छ, तापनि पर्वतीय पर्यटन विकासको लागि आवश्यक पूर्वाधारको विकास आवश्यकताअनुसार भएको पाइँदैन । ७ वटाभन्दा बढी चुचुराहरू खुल्ला गरिए तापनि मनास्लु हिमालय चुचुराहरूमा आरोहण गर्ने पर्यटकको संख्यामा भने निरन्तरता देखिन्छ । जस्तै इ सं १९९७ को शरद् ऋतुमा सातवटा पर्वतारोही समूहको नेतृत्वमा पाँचवटा देशका ५४ जना नागरिकहरूले मनास्लुको ८००० मिटरभन्दा अग्ला शिखरको आरोहणको प्रयास गरेका थिए । यी नागरिकहरूमध्ये सबभन्दा बढी संख्यामा जापानीज थिए भने भ्रमण वर्ष १९९८ को शरद् ऋतुमै उक्त शिखरहरूमा पाँचवटा देशका पाँचवटा समूहबाट नेतृत्व गरी करीब ५० जनाजति संख्याहरूले मनास्लुको शिखर चढेका थिए माटका – १९९७, १९९८) ।

**६ क. महत्वपूर्ण पर्यटकीय स्थलहरू**

पर्यटकीय विकासका निमित्त गोरखा जिल्लालाई त्रिपक्षीय महत्वपूर्ण स्थलको रूपमा हेर्न सकिन्छ, जस्तै ऐतिहासिक धार्मिक र प्राकृतिक स्थलहरू । उक्त ऐतिहासिक र धार्मिक स्थलहरूको पर्यटकीय सम्बन्ध प्राकृतिक दृश्यसँग पनि उत्तिकै जोडिएको पाइन्छ । उक्त स्थलहरूमध्ये निम्न स्थलहरूले पर्यटन विकास र विस्तारमा महत्वपूर्ण साथ दिँदै आएको देखिन्छ ।

**पोखरीथोक (गोरखा बजार)**

गोरखा जिल्लाको सदरमुकाम समुद्री सतहदेखि करीब १३०० मिटरका उचाइमा गोरखा बजारको बीचमा अवस्थित छ (समुच्च गोरखा जिल्ला रखा म्याप २०४३) । गोरखा बजार काठमाडौं-पोखरा राजमार्गदेखि २४ कि मि दूरीमा सहायक पक्की सडकले जोडेको छ भने काठमाडौंदेखि १४६ कि मि, पोखरादेखि १२० कि मि र नारायणघाट-देखि ६७ कि मि राजमार्ग र सहायक पक्की सडकले जोडेको छ र दैनिक बस सेवा सञ्चालित छन् । यातायातको सुविधा, पुरातात्विक महत्व भएका स्थान मनकामनाको श्रृंखला र दरौंदीको भञ्ज्याङ्गहरूको सुन्दर दृश्य देखिने भएकोले आन्तरिक पर्यटन विकासको निमित्त महत्वपूर्ण स्थल मान्न सकिन्छ ।



**ऐतिहासिक गोरखा दरबार र यसका साथमा रहेका दुई प्रसिद्ध मन्दिरहरू गोरखनाथ र गोरखकाली :**

यी दरबारका मन्दिरहरू गोरखा बजारको उत्तरपट्टिको करीब १५०० मिटरको उच्च पाखोमा अवस्थित छ । गणेश हिमाल, अन्नपूर्णा, माछापुच्छ्रे, मनास्लु र २९ शिखरहरूका मनमोहक दृश्य अवलोकन गर्ने प्राकृतिक आरामदायी ठाउँमा अवस्थित छ । यहाँको हावापानी ज्यादै स्वस्थकर छ । गोरखा दरबारको भौगोलिक अवस्थितिले प्राकृतिक दृश्यका साथै धार्मिक, इतिहास र पुरातात्विक महत्वको ज्ञान र शाह राजाहरूमा भौगोलिक ज्ञानको निपूणता थियो भन्ने कुराको बोध गराउँछ । यसै डाँडाबाट र दरबारबाट दृश्य हेरी राम शाहले जनताहरूको घरधुरीमा धूवाँ नआए खान पाएनन् कि भनी बुझ्न पठाउने गर्थे । यसबाट यो बुझिन्छ कि यो ठाउँ राजाले जनताको सुखदुःख बुझ्न सक्ने र शत्रुबाट बच्न सक्ने भौगोलिक दृष्टिबाट सुरक्षित ठाउँ हो ।

विभिन्न विषयका अनुसन्धानकर्ता, शैक्षिक भ्रमण समूहका यात्रुहरू तथा अन्य आन्तरिक पर्यटकहरू गरी वर्षको करीब ३०,००० यात्रुहरू गोरखामा आउने भएकाले पर्यटकीय ठाउँहरूको विकास र ऐतिहासिक पर्यटनको विस्तारमा विकास गर्नुपर्ने महसुस गरेका छन् (कायस्थ एन एल – १९९७ ए डि पृष्ठ – २०)

**मनकामना मन्दिर :**

गणेश र पार्वतीको मन्दिरको रूपमा स्थापित मनकामना मन्दिर नेपाल अधिराज्यभर नै प्रसिद्ध मन्दिर हुन् । यहाँ आन्तरिक पर्यटक र धर्मावलम्बीहरू साथै भारतका विभिन्न प्रान्तहरूबाट हिन्दू धर्मावलम्बीहरू आउने गर्दछन् । वार्षिक करीब एक लाखजति यात्रुहरू छिड्ने ठाउँ हो मनकामना मन्दिर क्षेत्र । यो मन्दिर समुद्री सतहदेखि करीब १३०० मिटरको उचाइमा अवस्थित छ (समुच्च रेखा, गोरखा जिल्ला म्याप क – ख २०४३) । यो स्थान गोरखा बजारबाट १० कि मि र आँबुखैरेनीबाट ६०३ कि मि पैदल बाटोको दूरीमा अवस्थित छ । यस धार्मिक स्थलको मुख्य समस्या नै अपर्याप्त पिउने पानी र होटल तथा लजहरू हुन् । हाल यहाँ २६ वटा होटल तथा लजहरू छन्, जुन पूजाको मुख्य समय असोज-मङ्सिरको प्रायः शुक्रबार) मा अपर्याप्त छन् (कायस्थ एन एल इ स १९९७ पृ २१) ।

उल्लिखित समस्याको समाधान केबलकारबाट हुने सम्भावना छ, किनकि यो यातायातको साधनबाट यात्रुहरू एकै दिनमा मनकामना पुगी सोही दिनमै फर्केर आउन सकिन्छ । यो केबकार मनकामना दर्शन प्राइभेट लिमिटेड, चितौन को. इ. (पि) एल. टि. डि (Chitwan Co (P) Ltd) कन्सल्टेन्सीमा भ्रमण वर्ष १९९८ को उपलक्ष्यमा अक्टोबरदेखि सञ्चालन भएको हो । यो कार २८ कि. मि. को दूरीमा, १२ मिनेटमा कुरिनटारबाट मनकामना पुग्दछ ।

केबलकारबाट दर्शकहरूलाई अनुकूल प्रभाव परेको छ भने मनकामनाका व्यापारी र स्थानीय अर्थतन्त्रमा प्रतिकूल असर परेको महसुस गरिएको छ । (पवित्र थापा – २०५५, भगालविद सेडा)

उल्लिखित मुख्य ऐतिहासिक र धार्मिक स्थलहरूबाहेक निम्नलिखित मन्दिर र गुम्बाहरूलाई पर्यटन विस्तारमा महत्वपूर्ण मान्न सकिन्छ ।

**मुख्य मन्दिरहरू :**

- गणेश, महादेव मन्दिर, पोखरीथोक
- राममन्दिर, खांपलाङ्ग
- भीमसेन र गोरखकाली मन्दिर, आरूघाट
- गोरखकालीको मन्दिर, अजिरकोट, हंसपुर गा. वि. स.

**मुख्य गुम्बाहरू :**

- कर्जुछिलिङ्ग – सामागाउँ (उ. पश्चिम मनास्लु क्षेत्र)
- ऋङ्गी – प्रोक गाउँ (उ. पश्चिम मनास्लु क्षेत्र)
- मनासलु – ल्बो गाउँ (उ. पश्चिम मनास्लु क्षेत्र)
- नामल – नामरूङ्ग (उ. मनास्लु क्षेत्र)

मनकामना गोरखा दरबारका मन्दिरहरूलगायत उल्लिखित मन्दिर र गुम्बाहरूको विषयमा सञ्चारका साधनबाट चेतनशील बनाउन जीर्णोद्धार र सम्वर्धन पुऱ्याएमा नेपालको भ्रमण वर्ष इ. सं. १९९८ को मुख्य उद्देश्य, आन्तरिक पर्यटनको विकास र विस्तारको विषय पूरा हुनको साथै अन्तर्राष्ट्रिय पर्यटनको विकासमा पनि वृद्धि निश्चित देखिन्छ । किनकि नेपाली बढी समय धार्मिक कार्यमा बिताउन चाहन्छन् भने धार्मिक स्थानहरूमा बढी भ्रमणका योजना राख्दछन् र यस्ता ठाउँहरूमा आन्तरिक पर्यटनको सुविधा उपलब्ध विकासले आन्तरिक पर्यटनको विस्तारमा पनि सहयोग पुग्नेछ (कायस्थ – एन. एल. १९९७ पृ. ३७) ।

यसकारण धार्मिक तथा सांस्कृतिक महत्वका मठ-मन्दिरहरू, गुम्बा आदि र विद्यमान देवस्थलहरूमा पर्यटकहरू बढी आकर्षित हुने गरी सर-सुविधाहरू विस्तार गर्नुका साथै यस्ता स्थलहरूलाई अन्तर्राष्ट्रिय धार्मिक केन्द्रका रूपमा विकसित गर्न पनि पर्यटन कार्यनीतिहरू २०५२ मध्ये एक हो (मोटका – २०५२ पृ.३) ।

**मुख्य प्राकृतिक स्थल :**

यस जिल्लाका प्रमुख नदी, वेसी, उपत्यका र पर्वतहरू जो पर्यटकीय स्थलहरूमा पर्न आउँछन्, यसको व्यवस्था भौगोलिक पृष्ठभूमि र पर्वतहरूको सूचीमा नै दर्शाइसकिएको छ । बाँकी गोरखाका विभिन्न ठाउँमा केही प्रसिद्ध गुफाहरू छन्, जसले पर्यटन विकासको विस्तारमा सहयोग पुऱ्याउँछ ।

**मुख्य गुफाहरू :**

- गोरखनाथगुफा – गोरखा
- सीतागुफा – सुलीकोट
- सिद्धगुफा – घ्यालचोक
- बक्रेश्वरगुफा – मनकामना



**६ ख. विकासको निमित्त गोरखाको पर्यटन श्रोत र संभाव्यता :**

इ. सं. १९९१ को गुरुयोजनामा नै गोरखा पर्यटन विकासको सूचीमा परिसकेको भएता पनि टच रस मेनेजमेन्ट कन्सल्टेन्सी १९९० को अध्ययनले गोरखामा बहुपक्षीय पर्यटन (Diversity Tourism) विकास-विस्तारको संभाव्यता भएको औंल्याएको छ ।

**संभाव्यता र श्रोतहरू :**

**६ ख १. भौतिक पूर्वाधारको विकास कार्यक्रम स्थापना :**

एशियन विकास बैंक मनिलाले गोरखा जिल्लाभरि र सदरमुकाममा भौतिक पूर्वाधारको विकास कार्यक्रम स्थापना गर्न सहमति जनायो, जुन सहमतिको आधारमा गोरखालाई 'पर्वतीय पर्यटन विकास' को लागि उचित जिल्ला मानेका छन् । किनकि काठमाडौंदेखि चार घण्टाको बस सेवाबाट गोरखा पुगिन्छ । यसै सुविधाले गर्दा पर्यटकीय फाइदा उठाउन सकिन्छ । यसको साथै पर्वतीय पर्यटनको विकास गर्न हेलिकोप्टर सेवाहरू पनि एक पर्यटन केन्द्रबाट अर्को पर्यटन केन्द्रसम्म र काठमाडौंबाट गोरखाको विभिन्न पर्यटन केन्द्रहरूमा सञ्चालन गर्न सम्भव देखिन्छ ।

**६ ख २. मुख्य पर्यटन केन्द्रहरूको बीचमा गोरखाको अवस्थिति :**

गोरखा जिल्ला मुख्य पर्यटकीय केन्द्रहरूको बीचमा पर्दछ । ती मुख्य पर्यटक केन्द्रहरू क्रमशः काठमाडौं, पोखरा र चितवन राष्ट्रिय निकुञ्ज पर्दछ । यसको साथै गोरखा सर्कयुट बाटोले लुम्बिनीलाई जोड्दछ । त्यसैले गोरखा, काठमाडौं, पोखरा, चितवन र लुम्बिनी केन्द्रहरूको केन्द्रविन्दु भएको छ । पोखरा, काठमाडौंका साथै अन्य पर्यटन केन्द्रहरूमा व्यस्त भीड भयो भने पर्यटकहरू गोरखातर्फ लाग्दछन् । पोखराको प्राकृतिक सुन्दर दृश्यजस्तै गोरखाले पनि प्रस्तुत गर्दछ ।

**६ ख ३. पर्यटन विकासको उपलब्धि**

पर्यटन विकासको निमित्त विभाजित गरिएको दुई मुख्य पर्यटन केन्द्रको पृथक्-पृथक् अध्ययनबाट बेग्लाबेग्लै पर्यटन विकासको उपलब्धि हासिल हुने देखिन्छ ।

ती पृथक् २ क्षेत्रहरू उत्तरी मनास्लु प्रदेश र दक्षिणी मनास्लु क्षेत्र पर्दछन् । यी दुवै क्षेत्रहरूको आ-आफ्नो भौगोलिक र पर्यावरणीय अवस्था, सामाजिक, आर्थिक र सांस्कृतिक विविधता भएको हुनाले छुट्टाछुट्टै किसिमले पर्यटन विकासका निमित्त बहुपक्षीय विकासका आधार र बहुपक्षीय अध्ययन गर्नुपर्दछ । बहुपक्षीय पर्यटन विकासको कारणबाट अन्तर्राष्ट्रिय पर्यटकहरूले बहुपक्षीय अनुभव गर्न पाउँछन् । उत्तरी मनास्लु पर्वतीय विकास क्षेत्रभित्र सर्दीवास, छेकम्पार, चुमचेट, मि, प्रोक ह्रो र सामागाउँ पर्दछन्, जसमध्ये प्रोकलाई पर्यटन केन्द्रविन्दु मानेका छन् । त्दक्षिणी मनास्लु पर्वतीय क्षेत्रभित्र बारपाक, ग्याचोक, सिमजुङ्ग, जौबारी, लाब्राक र उहिया हुन् र यी क्षेत्रको पर्यटन केन्द्र सिरानडाँडा हो ।

**६ ख ४. विविध रूपको धनी क्षेत्र गोरखा**

**वनस्पति सम्पदामा धनी** (Flora)

उत्तर र दक्षिणी मनास्लु पर्यटन क्षेत्रभित्र विभिन्न प्रकारका महत्वपूर्ण वनस्पति छन् भने कति वनस्पतिहरू लोप हुने अवस्थामा छन् । यस्ता वनस्पतिहरूको अनुसन्धान र

संरक्षणका क्रममा अनुसन्धानकर्ता र विकासको आयोजनाको दोहोरो सम्बन्धबाट पर्यटन विकासको विस्तारमा समेत सहयोग पुग्ने सम्भावना देखिन्छ।

नेपालका अन्य भागमा नपाइने लारीवस हिमालैका गोरखाको उत्तरी क्षेत्रमा पाइन्छ भने संसारमै दुर्लभ रूख, बूढीगण्डकीको करीब १,००० – १,६०० मिटरको उचाइमा पाइन्छ । ती रूखमध्ये होमालियम नेपालेन्स (Homalium Nepolense) एक हुन् (केस्ट – १९९५ पृ. १६४)। करीब २००० मिटरको उचाइको कोणधारी जङ्गलमा निगालो प्रशस्त पाइन्छ र गोरखामा यसको उद्योग खोली स्थानीय आयश्रोतको माध्यम बनेको छ।

करीब २८०० मिटरको उचाइमा रहेको बारपाक र लाप्राकको बीचमा पर्ने ठाउँ सुनाखरी (Orchid) को निमित्त उपयुक्त हावापानी भएकोले गाउँलेहरूले यसको खेती गरी फाइदा उठाउन सक्दछन्।

गोरखा जिल्लाको विभिन्न आसपासमा (४००० मि.) मा भैरूङ्गपाती, सुनपाती र स-साना धूपीका रूखहरू पाइन्छन् भने यो रेखाभन्दा केही माथि निएमसी, जटामसी तथा पाँचऔंले, कुड्की, पदमचाल, सेतो विष, नीलो विष आदिजस्ता औषधि उद्योगलाई उपयुक्त जडिबुटी पाइन्छन्।

**महत्वपूर्ण जङ्गली जनावर र चराहरू**

उत्तरी र दक्षिणी मनास्लु पर्यटन क्षेत्रमा कस्तुरी मृग, हिमाली भेडा, हिउँचितुवा, हिमाली कालो भालु, साधारण चितुवा, वनबिरालो, दुम्सी, जङ्गली सुँगुर, जङ्गली कुकुर, हिमालयन थार र घोरल, विभिन्न प्रकारका बाघ र रेड पाण्डा, हिउँचरो आदि महत्वपूर्ण जनावरहरूको अवलोकनबाट विदेशी अनुसन्धानकर्ताको आकर्षण हुने र व्यक्तिगत पर्यटकको संख्यामा बृद्धि हुने देखिन्छ।

उत्तरी मनास्लु क्षेत्रमा १९० भन्दा बढी र दक्षिणी मनास्लु क्षेत्रमा करीब ४५ प्रकारका चराहरू पाइन्छन् (बाँस्कोटा, के. र शर्मा, वि. – १९९५ पृ. १३६ – १३७)।

**६ ख ५. विकास आयोजनाहरूको विस्तार :**

ग्रामीण स्तरको चौतर्फी विकासको माध्यमबाट गोरखाको पर्वतीय पर्यटन विकासको सम्भावना महसुस गरी गोरखा विकास परियोजानको नेतृत्वमा विभिन्न विकास आयोजनाको विकास भएको छ । यी विकास आयोजनामा भौतिक पूर्वाधार, सामूहिक आयवृद्धिदर, शिक्षा, पर्यावरणीय संरक्षण शिक्षा, पर्यटन विकासको शिक्षा, इन्धनको विस्तार, पशुपालन, फलफूल र तरकारी खेती आदिमा सहयोग गर्ने र त्यसबाट पर्यटकहरूलाई आपूर्ति गराउने उद्देश्यले यो गोरखा विकास परियोजना र यसअन्तर्गत निम्न सङ्गठनहरू सम्मिलित छन्।

**पर्यटन विकासमा संस्थाहरूको भूमिका :**

गोरखा विकास परियोजनाले विभिन्न गैरसरकारी संस्थाहरूको साझेदारीमा विभिन्न सामुदायिक विकास परियोजनाहरूको थालनी भइसकेको छ । गोरखा पर्वतीय पर्यटन विकास र गोरखा पर्यटन संरक्षण विकासका सम्पूर्ण आयोजनाहरूको विस्तारित कार्यक्रम र मूल्याङ्कनको नेतृत्व गोरखाको विकास परियोजनाबाट गर्दै आएको छ।



**(क) कन्फिडेन्स बिल्डिङ प्रोजेक्ट :**

यस परियोजनाअन्तर्गत सामूहिक विकासको क्रममा निश्चित भौतिक पूर्वाधारको विकास गरी स्थानीय व्यक्तिलाई पर्यटन विकासबाट फाइदा उपलब्ध गराउने कार्यक्रम पर्दछ।

**(ख) रूरल सेल्फ रिलिएन्ट डेभेलोपमेन्ट प्रोजेक्ट** (Rural Self-Reliant Development Project)

यस परियोजनाको साझेदारीमा गोरखाको सुगम र दुर्गम जिल्ला गरी ५० वटा जिल्लाहरूमा विभिन्न सामूहिक स्तरका कार्यक्रम लागु गरेका छन् । जस्तै : पिउने पानी, बाटोको निर्माण, पुल, तरकारी खेती, सरसफाई कार्यक्रम आदि पर्दछन् । दुर्गम क्षेत्रअन्तर्गत पर्ने फिलिनदेखि छेकमारासम्मको बाटोको निर्माण, त्रिशूलीको पुल निर्माण गरिसकेको छ।

**(ग) सेकोडर** (CECODER)

यो गोरखा विकास परियोजनाको अर्को साझेदारी संस्था हो । यसले ग्रामीण पर्यटन विस्तारमा शीप उपलब्ध गराउँदै आएको छ।

गोरखा विकास परियोजनाले पर्वतीय पर्यटन र पर्यटन संरक्षणका निम्ति विभिन्न कार्यक्रमहरू सञ्चालन गर्न विभिन्न श्रोतहरू जुटाउँदै आएको छ र जुटाउँदै जाने कार्यक्रम छ। पर्वतारोहणबाट उठ्ने रकमको ६०% सामुदायिक ग्रामीण विकासमा लगाउने श्री ५ को सरकारको निर्णय भए तापनि कार्यान्वयन हुन सकेको छैन।

**७. सारांश तथा निष्कर्ष :**

इतिहासदेखि भूगोलसम्मको धनी जिल्ला गोरखा नव नेपालका सृजनाका श्रोत हुन्।

पहाडी जिल्ला भए पनि भौगोलिक विविधताको आधारमा चारवटा प्राकृतिक प्रदेश, दुईवटा मुख्य नदी उपत्यकामा विभाजित छन् । विश्वको छैटौं स्थानमा पर्ने उच्च हिमशिखर मनास्लुलगायत अन्य हिमशिखरहरूको उपस्थितिले पर्वतीय अन्तर्राष्ट्रिय पर्यटन विकासमा सहयोग पुऱ्याएको छ भने प्रमुख धार्मिक र ऐतिहासिक स्थलहरूको अवस्थितिले आन्तरिक तथा बाह्य पर्यटन विकासको विस्तारमा टेवा पुऱ्याएको छ।

विभिन्न भौगोलिक पृष्ठभूमिका आधारमा यो क्षेत्र प्राकृतिक वनसम्पदा र जङ्गली पशुपंक्षीको दृष्टिबाट धनी छन् र अनुसन्धानकर्ताहरूका लागि अनुसन्धान गर्ने एक प्रमुख रमणीय र कौतुहलताको विषय बनेको छ गोरखा जिल्ला।

उक्त जिल्ला काठमाडौं, पोखरा, चितवन र लुम्बिनीजस्ता महत्वपूर्ण पर्यटन केन्द्रहरूको बीचमा अवस्थित भएकोले यो ठाउँ पर्यटन विकास विस्तारमा थप आकर्षण बनेको छ।

यस जिल्लाको विभिन्न क्षेत्रको सामुदायिक विकासक्रममा गोरखा विकास परियोजना र यससँग आवद्ध संस्थाहरूले सक्रिय भूमिका खेलेका छन्, जसबाट ग्रामीण समुदायको

निम्नस्तरको जनसहभागिताबाट पिउने पानी, बाटोघाटो निर्माण, शिक्षा, पर्यटन संरक्षण, शिक्षा, स्वास्थ्य र सरसफाई, तरकारी खेती, पशुपालन व्यवसाय र पर्यटन विस्तारका लागि सीपमूलक तालिम कार्यक्रमहरू सञ्चालन गरेर त्यस जिल्लाको विकास गर्नमा प्रशंसनीय कार्यहरू गर्दै आइसकेका छन् ।

**पादटिप्पणी** (References)


(१) उपाध्याय, श्रीप्रसाद (२०५४) बडामहाराजाधिराज र राष्ट्रिय चिन्तन, नेपाल, गोरखापत्र दैनिक, पौष २७

(२) श्री ५ को सरकार, मोटका (२०५२) पर्यटन नीति, कार्यनीति, सिंहदरबार काठमाडौं २०५४

(३) श्री ५ को सरकार, मोटका (इ. सं. १९९६) सम प्रोभिजन्स् रिलेटिङ्ग टु माउन्टेन टुरिज्म् इन नेपाल, सिंहदरबार काठमाडौं, नेपाल

(४) श्री ५ को सरकार, सि बि एस (इ सं १९९८) सेन्सस बुक्लेट, थापाथली काठमाडौं, नेपाल

(५) श्री ५ को सरकार, सूचना तथा सञ्चार मन्त्रालय (२०३१) नेपाल परिचय भाग - ३, सिंहदरबार काठमाडौं

(६) श्री ५ को सरकार, मोटका (इ सं १९९७ र १९९८) लिस्ट अब माउन्टेनियरिङ्ग टिम परमिटेड ड्युरिङ्ग १९९७ र १९९८, अटोमन सिजन, भिजिट नेपाल ९८, सिंहदरबार काठमाडौं, नेपाल

(७) टच रस मेनेजमेन्ट कन्सलटेण्टस् (१९९०), नेपाल टुरिज्म् डेभलपमेन्ट प्रोग्राम ए रिपोर्ट फर द एशियन डेभलप्मेन्ट बैंक एण्ड मिनिष्ट्री अब टुरिज्म, काठमाडौं नेपाल

(८) देवकोटा ध (२०५५) पिपल्स पार्टिसिपेसन इन प्रोटेष्ट मेनेजमेन्ट : अ केस स्टडी अब लुदी कम्युनिटी फरेष्ट युजर ग्रुप इन गोरखा डिष्ट्रिक, डिजरटेसन, टि यु सोसियोलोजी, एन्थ्रोपोलोजी, सेन्ट्रल डिपार्टमेन्ट

(९) बाँस्कोटा के र शर्मा बि (१९९५), टुरिज्म फर माउन्टेन कम्युनिटी डेभलप्मेन्ट केस स्टडी रिपोर्ट अब द अन्नपूर्ण र गोरखा, इसिमोड, नेपाल

(१०) वैद्य तु रा र बज्राचार्य ध (२०२८), गोरखाको ऐतिहासिक सामग्री, नेपाल एशियाली अध्ययन संस्थान

(११) वैद्य, तु. रा (इ स १९९३), पृथ्वीनारायण शाह, द फाउन्डर अव मोर्डन नेपाल, अनमोल पब्लिकेशन, न्यू देल्ही इण्डिया

(१२) शर्मा चन्द्र (२०३०), जिओलोजी अब नेपाल, काठमाडौ नेपाल

(१३) शर्मा हरिभक्त, सम्पादक (इ. सं. १९९७) नेपाल डिस्ट्रिक प्रोफाइल, अ डिस्ट्रिकवाइज सोसियो-टेक्नो-इकोनोमिक प्रोफाइल एलोड विद अ कम्प्रिहेन्सिभ नेसनल प्रोइल अब नेपाल, नेशनल रिसर्च एसोशिएट्स् नेपाल ।

(१४) समुच्च रेखा म्याप गोर्खा जिल्ला, क र ख (२०४३), नापी महाशाखा, काठमाडौं नेपाल






कविता

# पृथ्वीको चिन्तन

– केदार न्यौपाने

गोर्खा मेरो चरण पहिलो एकताको बिहानी
अग्लो आस्थाशिखर युगका वीरताको निसानी
फुल्छन् श्रद्धासुमन जसको स्नेहमा सेचिनाले
उठ्छन् मान्छे मनुजपनका भावको सम्झनाले ॥१॥

बाटो हेर्दै समय-गतिले पर्खिएको छ आज
माटो आफैं चलमल गरी सर्नलाई तयार
नेपालीको अनुपम कला सिर्जना-सिक्त धार
रक्षा गर्ने बखत, नगरे गुम्छ अस्तित्वसार ॥२॥

टुक्राटाक्रीसरह सब यी राज्य, राजा-रजौटा
जुध्छन् आफैं तब त अरुले चाल चाल्छन् अनौठा
टुट्दा-फुट्दा अटल नहुने राष्ट्रको स्वाभिमान ?
आफैं चर्केपछि त कसले गर्छ हाम्रो र मान ? ॥३॥

छिर्ला कोही अधम र हठी जाल रच्ला कि केही ?
लुट्ला, हर्ला सतत कसले लिन्छ चिन्ता र खोइ !
बाँच्छौं हामी मिलजुल रहेसम्म स्वाधीनतामा
हुन्नन् एक्लै विकसित थुँगा पत्रले छुट्टिंदामा ॥४॥

नेपालीका विविधपनको एकतामा रमेर
आफ्नै श्रद्धा-सुमन दिलको वाटिकामा बसेर
ज्यादै उच्चो प्रविधि र कला-साधनाले समृद्ध
पार्ने इच्छा प्रखर उनको राष्ट्र-निष्ठा अपूर्व ॥५॥

कविता

# पृथ्वीको फूलबारी सजाऔं

– शिशिर शर्मा



मेची र काली सिमाना साँधी हाँस्तछन् हिमाल
पृथिवीमाभ्क एशिया काख सुन्दर नेपाल
ती गोरखकाली, त्यो गोर्खा दरबार अतीत लिएर
पृथ्वीको सन्देश नेपालीलाई हाँस्तछन् दिएर ।

गोरखाली धारा भिराला गरा निकै छन् रसिला
चार जात छत्तीस वर्णका सारा नेपाली हँसिला
नेपाली हामी रहौंला कहाँ नेपालै नरहे ?
पृथ्वीको पौरख कर्तव्यपथमा लम्केर नगए ।

पश्चिमबाट त्यो अन्नपूर्ण लम्केर हेर्दछ
पूर्वको गणेश, सगरमाथा गोरखा नै देख्दछ
मुसुक्क हाँस्छ मनास्लु आफैं खेलाई काखमा
गोरखालाई रसिलो पार्ने गण्डकी साथमा ।

बोर्लाङ्को डुङ्गा, गुराँसका थुङ्गा पृथ्वीलाई सम्भन्छन्
ती डाँडाकाँडा गोरखाका सुर्का हरिया बन्दछन्
चेपेको पानी, हिमाली नानी मनकामना देवी
पृथ्वीका सन्तान नेपाली भन्छौं बन्दछौं देशसेवी

म जन्में मेरै राष्ट्रको लागि मेरो हो चाहना
राष्ट्रको हित हुँदैन भुल्न लिउँ सद्भावना
विश्वमा सभ्य समृद्धशाली नेपाल बनाऔं
सबैको श्रम विवेकले पृथ्वीको फूलबारी सजाऔं ।





बालकविता

# एकता दिवस

– सञ्चिता सिलवाल
कक्षा ६, संस्कार इ. स्कूल



साथीभाइ सँगीहरू आँखा नबटार
स्नेह हुन्छ सबको दिलमा रिसलाई परै सार
हामी सबै मिल्यौं भने गाउँ मिल्न जान्छ
गाउँ-गाउँ मिलेमात्र एकता त्यहाँ हुन्छ ।

मानवताको ज्ञानबिना कसरी मिल्न सक्छौं
नेपाल आमालाई खुशी पार्न कसरी जुट्न सक्छौं
शक्तिशाली पाखुरा लिई नजाऔं विदेश
फर्की हेरौं पृथ्वीको दिव्य उपदेश ।

एकता दिवस मनाउन एकता नै हुनुपर्छ
विकासको जग बसाउन गाउँलाई हेर्नैपर्छ
सानो हुँदा पृथ्वी पनि हुर्केथे कोक्रामा ।
पृथ्वीजयन्ती मनाउन म त जाँदैछु गोरखामा ।

**२७७ औं पृथ्वीजयन्ती तथा राष्ट्रिय एकता दिवस, २०५५ को सुखद अवसरमा सम्पूर्ण देशवासीमा हार्दिक शुभकामना ।**




Treks (Pvt.) Ltd P. O. Box : 15145, Call: 977-1-423542, 424632
E-mail: manaslutrek@wlink.com.np
Fax : 977-1-351155,
Thamel, Kathmandu, Nepal

---

**२७७ औं पृथ्वीजयन्ती तथा राष्ट्रिय एकता दिवस, २०५५ को सुखद अवसरमा सम्पूर्ण देशवासीमा हार्दिक शुभकामना व्यक्त गर्दछौं ।**

Hirendra B. Rajbhandari
Shubha R. Bajracharya
Prakash B. Rajbhandari

# ART GALERY

**Shakya Arcade, Durbar Marg, Kathmandu**
**Opp. Indosuez Bank**

---

**२७७ औं पृथ्वीजयन्ती तथा राष्ट्रिय एकता दिवसको सुखद अवसरमा सम्पूर्ण देशवासीमा हार्दिक शुभकामना ।**

*Hotel Manaslu (P) Ltd.*
FOR TRADITIONAL NEPALESE HOSPITALITY

Lazimpat Kathmandu Nepal
Tel 410071 413470 429671 429571
Fax 977-1-416516
E-mail postfax@mos.com.np




---

**२७७ औं पृथ्वीजयन्ती तथा राष्ट्रिय एकता दिवस, २०५५ को सुखद अवसरमा सम्पूर्ण देशवासीमा हार्दिक शुभकामना व्यक्त गर्दछौं ।**



# Bimal Traders

Maharajgunj, Chakrapath. Tel : 370047
P.O. Box : 8975 EPC 4210 Kathmandu, Nepal



---

अब नेपालको पहिलो केबुल कार
मनकामना जाने सपना हुनेछ साकार

के छ **विचार ?**

चढ्ने होइन त **केबुल कार ?**



**टिकट मूल्य:**
**एक तर्फी-रु.२०० -**
**दुई तर्फी-रु.२५० -**

मनकामना केबुल कारको चेरेश कुरिनटार स्थित स्टेशन, काठमाडौंबाट १०४ कि. मि., पोखराबाट ९४ कि. मि., नारायणघाटबाट ४० कि. मि., र मुग्लिङ बजारबाट ४ कि. मि. पर्दछ ।



मनकामना दर्शन (प्रा.) लि.
MANAKAMANA DARSHAN (P.) LTD.

पो. ब. ४६१६, नक्शाल, नागपोखरी, काठमाडौं फोन: ४३४६९०, ४३६६४८, फ्याक्स: ४३४५१५

२७७ औं पृथ्वीजयन्ती तथा राष्ट्रिय एकता दिवस, २०५५ को सुखद अवसरमा सम्पूर्ण देशवासीमा हार्दिक शुभकामना ।

**MARSYANGDI APPARELS (P) LTD.**

G.P.O. Box: 3745, Thamel, Kathmandu, Nepal

Show Room: Thamel
Tel./Fax: 977-1- 410955

Factory :
Tel 423473

---

पृथ्वीजयन्ती तथा राष्ट्रिय एकता दिवसको पावन उपलक्ष्यमा सम्पूर्ण देशवासीमा हार्दिक शुभकामना व्यक्त गर्दछौं ।




**TRANS WAYS CARGO SERVICE**

P.O.Box : 10271, Jyatha, Thamel, Kathmandu, Nepal
Tel : 220019, Fax : 00977-1-255724

---

२७७ औं पृथ्वीजयन्ती तथा राष्ट्रिय एकता दिवस, २०५५ को सुखद अवसरमा सम्पूर्ण देशवासीमा हार्दिक शुभकामना ।




**HIMLUNG TREKS PVT. LTD.**

P.O. Box : 5515 Kantipath (Next to British Council)
Kathmandu, Nepal.
Tel. : 258596, Fax : 977-1-258597
E-mail : himlung@wlink.com.np
http://www.catmando.com.himlung

---

खाडी मुलुकहरूमा रोजगारीको सुनौलो अवसर खोजिरहेका दक्ष तथा अर्धदक्ष व्यक्तिहरूले सुरक्षित रोजगारीको लागि सिधै हामीकहाँ सम्पर्क गर्नुहोला ।



**Sun International Overseas Pvt. Ltd.**

Gongobu, New Bus Park, Kathmandu, Nepal
Lic No. 46/050-51
Tel No : 353309, 354398, 373083, 355294 Fax No : 354967, 372604, 353986



आजको राष्ट्रिय स्वाभिमान जगाउनुपर्ने प्रसङ्गमा समस्त देशवासीहरू र विशेष गरी गोरखानिवासीहरूमा मेरो हार्दिक शुभकामना !

**राजेश्वर देवकोटा**

गोरखा

---

पृथ्वीजयन्ती तथा राष्ट्रिय एकता दिवसको पावन उपलक्ष्यमा सम्पूर्ण देशवासीमा हार्दिक शुभकामना व्यक्त गर्दछौं ।

अध्यक्ष मोहन गुरुङ

**तरुण ढुवानी सेवा, काठमाडौं**

फोन नं. ३५५२४०

---

२७७ औं पृथ्वीजयन्ती तथा राष्ट्रिय एकता दिवसको पावन उपलक्ष्यमा सम्पूर्ण देशवासीमा हार्दिक शुभकामना ।

भगवान गुरुङ

**नेपाल लिगल फर्म**

पुतलीसडक चोक, बागबजार, काठमाडौं । फोन नं. २२११४७

---

पृथ्वीजयन्ती तथा राष्ट्रिय एकता दिवसको पावन उपलक्ष्यमा सम्पूर्ण देशवासीमा हार्दिक शुभकामना ।

**The Explore Nepal P.Ltd.**

P.O.Box : 536, Kamaladi, Kathmandu, Nepal Tel : 247078, 247079, 240081
Fax : 977-1-243250, 224237 E-mail : explore@mos.com.np

२७७ औं पृथ्वीजयन्ती तथा राष्ट्रिय एकता दिवसको पुनीत उपलक्ष्यमा सम्पूर्ण देशवासीमा हाम्रो हार्दिक शुभकामना ।




**Royal Mt. Trekking (P) Ltd.**

P.O.Box: 10798, Durbar Marg, Kathmandu, Nepal
Tel: 241452, 258236, Fax: 977-1-245318
E-mail: Royalmt@mos.com.np

पृथ्वीजयन्ती तथा राष्ट्रिय एकता दिवसको अवसरमा हार्दिक शुभकामना ।

**Eco Trek**

Thamel, Kathmandu, Nepal
Tel: 424112, 424113

पृथ्वीजयन्ती तथा राष्ट्रिय एकता दिवसको उपलक्ष्यमा
सम्पूर्ण देशवासीमा हार्दिक शुभकामना !

**साल्ट ट्रेडिङ कर्पोरेसन लिमिटेड**

२७७ औं पृथ्वीजयन्ती तथा
राष्ट्रिय एकता दिवस, २०५५ को शुभ उपलक्ष्यमा
सम्पूर्ण देशवासीमा
हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**गोरखा समाजसेवा केन्द्र**

**परिवार, काठमाडौं**



२७७ औं पृथ्वीजयन्ती
तथा
राष्ट्रिय एकता दिवस, २०५५ को
सुखद अवसरमा
सम्पूर्ण देशवासीमा
हार्दिक मङ्गलमय शुभकामना !



**Yeti Airways**
Experience the Shangri-La

P.O. Box : 11551, Lazimpat, Kathmandu, Nepal
Phone No : 421147, 421215, 421294, 411912
Fax : 977-1-420766
e-mail : yetiair@vishnu.cccl.com.np

# गोरखा परिचय

## (स्मारिका)

गोरखा समाज सेवा केन्द्रद्वारा प्रकाशित



चारजात छत्तीस वर्णको साझा फूलबारी

२७७ औं पृथ्वी जयन्ती
तथा
राष्ट्रिय एकता दिवस
२०५५